بسم الله الرحمن الرحيم

# मन्तव्य

म यस किताब "**इस्लामी महिना र त्यसका बिशेषताहरु** "को सवाब ईश्क व मुहब्बतका इमाम , चौधवौ सदि हिजरीका मुजद्दीद , समयका सबै भन्दा ठुला बिद्वान, सम्पुर्ण आलिमले आफ्ना टाउकामा सजाएका ताज, ज्ञान र हिकमतले आफ्नो मुटु भरेका हाम्रा र सबैका इमाम आला हजरत इमाम अहमद रजा खाँ बरेल्वी रहमतुल्लाह अलैह

ताजदारे एह्ले सुन्नत, आलाहजरतका ज्ञान, हुजुर मुफ्ती ए आजम ए आलमका तक्वा, हुज्जतुल इस्लामका सुन्दरताका बेमिसाल झलक हुजुर ताजुश् शरीअह अल्लामा मुफ्ती अख्तर रजा खाँ अलैहिर रहमा

प्रिय गुरु, मेरा पिर, मुर्शिद ए बा कमाल, मेरा मनको संसार बद्लीदिने विद्वान, नेपालको हर भुमिमा राज हुने सम्राट, नेपालका सबै भन्दा ठुला आलिम, मुफ्ती ए आजम ए नेपाल, शेरे नेपाल मुफ्ति जैश मुहम्मद सिद्दिकी रह्मतुल्लाह अलैह ।

र मेरा खानदानमा इन्तेकाल हुने सम्पुर्ण मर्हुमको रुहलाई इसाले सवाब गर्दछु।

किताब भित्रका बुँदाहरुलाई भित्री नजरबाट हेरेर त्यहाँ रहेका भुलचुकहरुलाई हटाएर किताबलाई अझ सुन्दर रुपमा पेश गर्नु भएका

एहसानुल्लाह मियाँ दाजु (गोरखा)
अहमद रजा दाजु (गोरखा)
मौलना खालिद निजामी ( गोर्खा)

समक्ष म (साजिद अहमद) हार्दिक धन्यावाद पेश गर्दछु यो दुआको साथ कि यहाँहरु सबैलाई अल्लाह पाक अझ दीन ए इस्लाम सिक्ने, सिकाउने र दीनको खिदमत गर्ने तौफिक दिउन। आमिन.......

नोट: किताबमा केही गल्ती थाहा पाउनु भयो भने सवाबको नियतले बिना कुनै संकोच यस इमेल अथवा नम्बरमा सम्पर्क गर्नुहोला ।
somepeople.sk@gmail.com

## पहिलो इस्लामी महिना : मुहर्रम उल हरम

जसरी नेपाली पात्रोको सुरुआत बैशाख, अङ्ग्रेजी पात्रोको सुरुआत जनवरी महिना बाट हुने गर्छ त्यसरी नै इस्लामी हिजरि पात्रोको शुरुआत मुहर्रम महिना बाट हुने गर्छ ।

मुहर्रमको अर्थ आदर हुन्छ । अल्लाहको अन्तिम नबि हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लम द्वारा इस्लाम धर्मको घोषणा गर्नु अघि पनि यो महिनालाई निकै आदर र सम्मानको दृष्टिले हेर्ने गरिन्थ्यो त्यसैले यस्को नाम मुहर्रम हुन गएको कुरा इतिहासमा उल्लेख छ।

### हदिष अनुसार मुहर्रम महिनाको बिशेषता:

१) एकजना व्यक्तिले, अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लम  सामु उपस्थित भएर प्रश्न गर्यो-"या रसुलल्लाह सल्लल्लाहु अलैही वसल्लम ! रमजान बाहेक म अरु कुन महिनाको रोजा राखु? "अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो-"यदि तिमिलाई रमजान बाहेक अरु कुनै महिनामा रोजा बस्नु छ भने मुहर्रमको रोजा राख्नु किनकि यो अल्लाहको महिना हो र यसमा एक दिन (मुहर्रमको दस गते) यस्तो छ जस्मा अल्लाह पाकले एउटा समुहको तौबा  (पश्चाताप) कबुल गर्नु भएको थियो र अरुको पनि गर्नुहुनेछ"। (मुस्नद इमाम अहमद)

२) अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो "दस मुहर्रमको रोजा राख किनकि यस्ले तिम्रो एक बर्षको गुनाह मेटाइदिने छ र यो दिनको एक रोजा राख्नले एक बर्षको रोजाको बराबर सवाब प्राप्त हुनेछ ।"(मुस्लिम शरिफ)

३) हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो "रमजानको रोजा पछि सबैभन्दा उत्तम रोजा मुहर्रम महिनाको रोज़ा हो ।"(मुस्लिम शरिफ)

४) अल्लाहको अन्तिम नबि हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लम हिजरत (स्थानान्तरण/बसाईसराई) गरेर मदिना पुग्नु भएपछि त्यहाका यहुदीहरुलाई १० मुहर्रमको दिन रोजा राख्ने गरेको अवस्थामा पाऊनुभयो । अल्लाहको नबिले प्रश्न गर्नुभयो-" तिमिहरु आज को दिन किन रोजा बस्ने गर्छौ ?" यहुदीहरुले जवाफ दिए-"आज निकै पवित्र दिन हो किनकि आज कै दिन हजरत मुसा अलैहिस सलाम र वहाँका साथीहरुले फिरऔन र उस्का सिपाहीहरुबाट छुटकारा पाएका थिए । हजरत मुसा अलैहिस

सलामले कृतज्ञ भएर त्यो दिन रोजा राख्नु भएको थियो त्यसैले हामी पनि यसदिन रोजा राख्ने गर्दछौ"। तब अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो- "हामी मुसा अलैहिस सलाम सामु तिमिहरु भन्दा धेरै हकदार छौ" तसर्थ अल्लाहको नबिले त्यो दिन रोजा राख्नु भयो र रोजा राख्ने आदेश पनि दिनु भयो ।(मुस्लिम शरिफ हदिश नं २६५८)

**दस मुहर्रमको दिन:**

हजरत सैयदुना उसमान नेहदी रह्मतुल्लाह अलैह भन्नुहुन्छ :

हुन त मुहर्रमको पूरा महिना नै रहमत र बरकत (कृपा) को महिना हो तर अरु दिनको तुलनामा १० मुहर्रमको दिनलाई निकै उत्तम र फजिलत भएको मानिन्छ। सहाबा ए किराम निम्न तिन महिनाको १० दिनलाई निकै प्राथमिकता दिने गर्नुहुन्थ्यो:

(१) रमजानको अन्तिमको १० दिन

(२) जिल हिज्जाको शुरुको १० दिन

(३) मुहर्रमको शुरुको १० दिन

(स्रोत:लताइफ अल मुआरिफ पा. ३)

यस दिनलाई “आशुराको दिन" पनि भनिने गरिन्छ ।

**मुख्य दिनहरु :**

**आशुराको दिन इतिहासमा घटेका अविस्मरणीय घटनाहरु:**

- हजरत आदम अलैहिस सलामको जन्म १० मुहर्रमकै दिन भएको थियो।
- आजकै दिन अल्लाह तआलाले मुहम्मद सल्लल्लाहु अलैही वसल्लमको नामको बरकतले हजरत आदम अलैहिस सलामको तौबा कुबुल गर्नु भएको थियो ।
- आज कै दिन अल्लाह तआलाले अर्श, कुर्सी, आकास, पृथ्वी, सुर्य, चन्द्र, तारा र जन्नतको निर्माण गर्नु भएको थियो ।
- आज कै दिन हजरत नुह अलैहिस सलामको डुङ्गा जुदि नामक पहाडमा रोकिएको थियो ।

- आज कै दिन हजरत मुसा अलैहिस सलाम र वहाँका उम्मतले समुद्र पार गरेका थिए र आज नै फिरऔन र उस्का गुलामहरु हलाक (नस्ट) भएका थिए ।
- आज कै दिन हजरत युनुस अलैहिस सलाम माछाको पेट बाट ४० दिन पछि पनि जिवित निक्लिनु भएको थियो ।
- आज कै दिन हजरत युसुफ अलैहिस सलाम कुवाबाट निकालिनु भएको थियो ।
- आज कै दिन हजरत इसा अलैहिस सलामको जन्म भएको थियो र आज कै दिन वहाँलाई आकाशमा जिवित उठाइएको थियो ।
- आज कै दिन हजरत दाउद अलैहिस सलामको तौबा कुबुल भएको थियो ।
- आज कै दिन हजरत इब्राहिम अलैहिस सलामको जन्म भएको थियो ।
- आज कै दिन हजरत याअकुब अलैहिस सलामको आँखाको कमजोरी सदाका लागि सन्चो भएको थियो ।
- आज कै दिन हजरत इदरिस अलैहिस सलामलाई आकाशमा उठाइएको थियो ।
- आज कै दिन हजरत अैयुब अलैहिस सलामको परिक्षा समाप्त भएको थियो ।
- आज कै दिन हजरत सुलैमान अलैहिस सलामलाई सम्पुर्ण संसारको बाद्शाही प्रदान गरिएको थियो ।
- आज कै दिन इमाम हुसैन र वहाँका ७१जना साथीहरु करबालको भुमिमा शहिद भएका थिए।

**मुख्य दिनहरु :**

- १ मुहर्रम: अमिरुल मुअमिनिन सैयदुना उमरे फारुक रदि अल्लाहु अन्हुको शहादतको दिन।
- २ मुहर्रम: हजरत सैयदुना माअरुफ करखी रह्मतुल्लाह अलैहको इन्तेकालको दिन।
- ३ मुहर्रम: उम्मुल मुअमिनिन उम्मे सलमा रदि अल्लाहु अन्हाको इन्तेकालको दिन।
- ४ मुहर्रम: हजरत सैयदुना हसन बसरि रह्मतुल्लाह अलैहको इन्तेकालको दिन।
- ५ मुहर्रम: बाबा फरिदुद्दिन अत्तार गंजेशकर रह्मतुल्लाह अलैहको इन्तेकालको दिन।
- ८ मुहर्रम: इमामे हुसैनका छोरा सैयदुना जैनुल आबिदिनको इन्तेकालको दिन।
- १० मुहर्रम: मैदाने कर्बलाको दिन।
- १४ मुहर्रम: आला हजरतका कन्छा छोरा मुफ्तिए आजमे हिन्द अलैहिर रह्माको इन्तेकालको दिन।

• २० मुहर्रम: हजरत सैयदुना बिलाले हबशी रदि अल्लाहु अन्हुको इन्तेकालको दिन।

**मुहर्रमको महिनामा गरिने अमल र इबादतहरु :**

१) ९ र १० मुहर्रमको दिन वा १० र ११ मुहर्रमको दिन रोजा राख्ने । यस्को महत्वको बारेमा हामिले माथी मुहर्र्मको बिशेषतामा उल्लेख गरिसकेका छौ कि जुन व्यक्तिले १० मुहर्रमको रोजा राख्ने छ अल्लाह तआलाले उस्लाइ एक बर्षको रोजा राखेको सवाब प्रदान गर्नुका साथै उस्को एक बर्षको गुनाह (पाप) मेटाइदिनु हुनेछ ।

अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो दस मुहर्रमको रोजा राख र यस्को एक दिन अघि या एक दिन पछि पनि रोजा राख्ने गर । (मुस्नद अहमद)

अल्लाहको नबि हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लमको सहाबी हजरत अब्दुल्लाह इब्ने अब्बास रदि अल्लाहु अन्हु बर्णन गर्नुहुन्छ-"मैले अल्लाहको रसुल सल्लल्लाहु अलैही वसल्लमलाई  आशुरा र रमजानको रोजा बाहेक अरु दिनको रोजा यति महत्वपूर्ण का साथ खोज तलाश गरेर रोजा राखेको अरु महिनामा देखिन ।(बुखारी शरिफ भाग १ पाना  ६५७)

**२) आशुराको राती गरिने कार्यहरु :**

(नोट: इस्लामी पात्रोअनुसार ९ मुहर्रमको मगरिबको अज़ान संगै आशुराको रात शुरु हुने गर्दछ)

मुहर्रमको ९ र १० तारिखमा रोजा राख्नु नबि, सहाबा, औलिया र हाम्रा बुजुर्गहरुबाट प्रमाणित रहेको छ । यो दुई दिनको बिचको रात निकै रहमत र बरकतवाला मानिन्छ । त्यो रातमा गरिने इबादत र त्यसका फाइदाहरु :

- **गुसल गर्नु**

पुरा बर्ष रोग बाट बच्ने सानो उपाय !

कुरआनको व्याख्या "तफ्सिरे रुहुल बयान"को भाग ४ पाना नं.: १४२ मा लेखिएको छ जो व्यक्ति आशुराको राती नुहाउने छ त्यो व्यक्ति बर्ष भरी रोग बाट बच्नेछ किनकि त्यो दिन जमजमको पानि हरेक पानिमा पुग्ने गर्दछ ।

- **सुर्मा लगाउनु**

बर्षभरि आँखा नदुख्ने सानो उपाय!

शुएबुल इमान भाग ३ पाना ३६५ हदिष नं ३७९७ मा उल्लेख छ कि हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो "जुन व्यक्तिले आशुराको दिन इस्मिद नामि सुर्मा लगाउने छ त्यो व्यक्तिको आँखा कहिले पनि दुख्ने छैन "

- रोजा राख्नु।
- नफिल नमाजहरु पढ्नु।
- टुहुराहरुलाइ माया तथा सकेको सहयोग गर्नु।
- दुई मुस्लिम बिच मेलमिलाप गराउनु।
- बिरामी व्यक्तिलाई भेटघाट गर्नु।
- गरिब बालबालिकालाई सहयोग गर्नु।
- सम्पुर्ण मुस्लिमहरुका लागि दुआ गर्नु।
- कबृस्तान र मजारहरुमा जानु।
- आलिमहरुलाई भेट्न जानु।
- नङ्ग काट्नु।

**आशुरा (९ मुहर्रमको मगरिबको नमाज़ पछि) पढिने नफिल नमाजहरु :**

१. मगरिबको नमाज पछि २-२ रकात गरेर चार रकआत नफिल पढ्ने।

तरिका: हरेक रकआतमा शुरह फातिहा पछि १पटक आयतल कुर्सी र ३ पटक शुरह इख्लास (कुल्हु वल्लाहु अहद) पढ्ने। हरेक सलाम पछि तेस्रो कलिमा [सुब्हानल्लाही वल्हमदोलिल्लाहि वलाइलाह इल्लल्लाहु वल्लाहु अक्बर] ७० पटक, शुरह इख्लास [कुल्हु वल्लाहु अहद] १०० पटक र दुरुद शरिफ १११ पटक [आफुलाइ जुन सजिलो लाग्छ त्यहीँ पढ्दा हुन्छ] पढेर आफ्नो सम्पुर्ण गुनाहहरु बाट माफी माग्दै दुआ गर्ने।

फाइदा : यो पढ्ने व्यक्तिले अल्लाह तआलाको हजारौ रहमत र बरकत प्राप्त गर्ने छ र भविष्यमा आउने समस्या उस्को लागि सरल तरिकाले हल हुनेछ ।

**२. कबरको अजाब बाट बच्न पढिने नफल**

रातको कुनै पनि भागमा वजु गरेर २ रकआत तहियतुल वजुको नमाज पढेपछी ४-४ रकआत गरेर ८ रकात नफल नमाज पढ्ने।

तरिका:शुरह फातिहा पछि हरेक रकआतमा २५ पल्ट शुरह इख्लास [कुल्हु वल्लाहु अहद शुरह]पढ्ने। हरेक सलाम पछि ७० पल्ट दुरुदे इब्राहिमि [नमाजमा पढिने दुरुद] पढेर ७० पल्ट इस्तिग्फार[अस्तग्फिरुल्लाह रब्बी मिन्कुल्ले जम्बिउ वतुबु इलैह]पढ्ने र मग्फिरतको लागि दुआ गर्ने।

फाइदा : यो नमाज पढ्ने व्यक्तिको कबरमा उज्यालो हुनेछ र कयामतको दिनमा बख्शिशका साथ साथै जन्नत जाने उपहार पनि पाउनेछ ।

**३. सलातुल आशुरा**

दिनको कुनै पनि भागमा सलातुल आशुराको नियतले दुई रकआत नफल पढ्ने।

तरिका:  हरेक रकआतमा सुरह फातिहा पछि १०  पल्ट सुरह इख्लास पढ्ने र सलाम पछि यो दुआ पढ्ने :

बिस्मिल्लाहिर रहमानिर रहिम

या क़ाबि ल तौबति आदम यौम आशूराअ

या फारिजा करबी जिन्नूनी यौम आशूराअ

या जामी अ शमली याक़ूब यौम आशूराअ

या सामी अ दाअवती मूसा व् हारून यौम आशूराअ

या मुगि स इब्राहिम मिनन्नारी यौम आशूराअ

या राफ़ीअ इदरीस इलस्समाई यौम आशूराअ

या मुजी ब दावती सालिहिन फिन्नाकती यौम आशूराअ

या नासि र सय्येदेना मुहम्मदिन सल्लल्लाहु अलैहि वसल्लम यौम आशूराअ

या रहमान नददुनिया वल आखिरती व् रहिमहुमा सल्ली अला सय्येदेना मुहम्मदिंव व् अला आली सय्येदेना मुहम्मदिंव व सल्ली अला जमीईल अम्बियाई वल मुरसलीन वक़्ज़ी हाजातीना फिददुनिया वल आखिरती व अतिल उम रना फी ताअतीक व मुहब्बतिक व रेदाक व अहयेना हयातन तैय्यबतओं वतवफ़्फ़ना अललईमानी वल इस्लामी बिरहमतिक या अरहमर्राहिमीन ।

अल्लाहुम्मा बीइज़्ज़िल हसनी व् अखीही व उम्मीही व् अबिहि व जद्दीही व् बनिहि फर्रीज अन्ना मानहनू फ़ीहि ।

(फेरि सात पल्ट यो दुआ पढ्ने)

सुब्हानल्लाही मिलअलमिज़ानी व् मुन्तहलइल्मी व् मबलग़र रेदा व ज़िन तल अर्शी लामल जाअ वला मन जाअ मिनल्लाही इल्ला इलैहि । सुब्हानल्लाही अददश शफई वल वितरि व अदद कलीमातिल्लाहित्तामती कुल्लीहा नसअलुकस्सलामत बिरहमतिक या अरहमर्राहिमीन । व हुव हसबुना व नैमल वकील । नैमल मौला व नैमन्नसिर । वलाहौला वला कुव्वत इल्ला बिल्लाहिल अलियिल अज़ीम । व सल्लल्लाहु तआला अला सय्यदना मुहम्मदिंव व्अला आलिहि वसहबिहि वअलल मुअमिनीना वल मुअमिनाती वल मुस्लिमीन वल मुस्लिमाति अदद ज़ररातील वुजुदी व् अदद मालुमातील्लाही वलहम्दुलिल्लाही रब्बिल आलमीन । आमीन । सुम्मा आमीन ।

फाइदा : इमाम जैनुल आबिदिन रदिअल्लाहु अन्हु बयान गर्नुहुन्छ जो व्यक्तिले आशुराको दिन यो दुआ पढ्नेछ उस्को एक बर्ष सम्म मृत्यु हुने छैन ।

४. अमिरुल मुअमिनिन हजरत अलि रदिअल्लाहु अन्हुले भन्नुभएको छ "जुन व्यक्तिले आशुराको दिन १००० पल्ट सुरह इख्लास पढ्नेछ अल्लाह तआलाले त्यो व्यक्ति माथि नजर ख़ास राख्नु हुनेछ, जसमाथि अल्लाहको नजर हुनेछ उस्लाई कहिले पनि जहन्नमको अजाब हुनेछैन । (अन नुर फिल फजाइले अय्याम वश शुहुर)

## इस्लामी दास्रो महिना : सफर

अर्थ : सफरको अर्थ "खाली" हुन्छ । यो महिनामा अरबका घर खाली भएको कारणले पनि यस्को नाम सफर राखिएको मानिन्छ । सफरको अर्को अर्थ "पहेलो" हो । महिनाहरुको नाम लेखिने क्रममा यो महिनामा हिमपातको कारणले पूरा बातावरण पहेलो भएकोले यस महिनाको नाम सफर भएको कुरा धेरै किताबहरुमा उल्लेख रहेको छ ।

अरबवासीहरुले इस्लाम अघि पनि ४ महिनालाई निकै पवित्र मान्ने गर्दथे : जिल कादा, जिल हिज्जा, मुहर्रम र सफर । उनिहरु यस महिनामा झगडा गर्नु, कुनै गलत कार्य गर्नुलाई नराम्रो ठान्थे । हजरत मुहम्मद सललल्लाहु अलैही वसल्लमले इस्लामको घोषणा गर्नु अघि यस महिनालाई निकै मन्हुस र अशुभ मानिने गरिन्थ्यो र केहि व्यक्तिहरुले आज पनि मान्ने गर्छन् । जस्ले गर्दा सफरको महिनामा निकाह गर्नु वा कुनै भेला गराउनुलाई निकै नराम्रो बुझ्थे जुन एकदमै गलत हो, त्यस्को कुनै वास्तविकता छैन ।

हजरत जाबिर रदिअल्लाहु अन्हुले वर्णन गर्नुभएको छ, अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो :" सफरको महिनाले कुनै रोग हुनु या यो महिनामा केही अशुभ हुने कुरा गलत हो ।"(मुस्लिम शरिफ)

### सफरको महिनाम भएका मुख्य घटनाहरु :

- १ सफर: वारिसे पाक सैयद हाजी वारिस अलि शाह रह्मतुल्लाह अलैहको इन्तेकालको दिन।
- १२ सफर: अबवाको युद्ध २ हिजरीमा लडिएको थियो।
- १३ सफर: इमाम हुसैन रदिअल्लाहु अन्हुको कान्छी छोरी बिबि सकिना रदिअल्लाहु अन्हाको इन्तेकालको दिन।
- २० सफर: दाता गंजबख्स हज्वैरी रह्मतुल्लाह अलैहको इन्तेकालको दिन।
- २५ सफर: इमामे इश्क व मुहब्बत, मुजद्दिदे अह्ले सुन्नत आला हजरत इमाम अहमद रजा खाँको इन्तेकालको दिन।
- २७ सफर: हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लमको मदिना तर्फ हिजरत (बसाई सराई) को दिन।
- २७ सफर: सुल्तान सलाहुद्दिन अैयुबि रह्मतुल्लाह अलैहको इन्तेकालको दिन।

• २८ सफर: हजरत सैयदुना अलि मुश्किल कुशा रदि अल्लाहु अन्हुका ठुला छोरा, अल्लाहको नबिका नवासा सैयदुना इमाम हसन रदि अल्लाहु अन्हुको शहीद भएको दिन।
• खैबरको युद्ध यसै महिनामा ७ हिजरीमा लडिएको थियो
• यसै महिनामा हजरत अलि रदिअल्लाहु अन्हु र हजरत फातिमा रदिअल्लाहु अन्हाको निकाह भएको थियो

**आला हजरत रह्मतुल्लाह अलैहको परिचय:**

इस्लामका रक्षक, फिक्हका इमाम, आफ्नो समयका अतुलनीय मुफ्ती , इस्लामका शत्रुहरुलाइ परास्त गर्ने एक अविस्मरणीय व्यक्तित्व ,कवि, शिक्षक, मुफ्ती, बैज्ञानिक, दार्शनिक, सत्यमार्गका मार्गदर्शक, चौधौं शताब्दी का मुजद्दिद, प्यारा हबिब सल्लल्लाहु अलैही वसल्लम का सच्चा आशिक इमाम अहमद रजा खान हनफ़ि कादरी रह्मतुल्लाह अलैह भारतीय उपमहाद्वीपमा आला हजरत भनि चिनिने हाम्रा इमामको जन्म १० सवाल १२७२ हिज्रि  शनिबारको दिन दिउँसो (जुहर) को प्रार्थना को समयमा भारतको उत्तर प्रदेशको एक प्रमुख शहर बरेलीमा भएको थियो ।

उहाँको परिवार दुनियावी हिसाब ले पनि सु-सम्पन्न थियो। उहाँको पढाईको थालनी आफ्नै घर मा बुबा मौलाना नकि अलि खान मार्फत शुरु भएको थियो र उहाँले २० वटा क्षेत्रमा आफ्ना पिताबाट ज्ञान प्राप्त गर्नुभएको थियो। ४ बर्षको एकदमै सानो उमेरमा उनले पबित्र धर्मग्रन्थ कुरान शरिफ पाठ गरेका थिए। ६ बर्ष हुदा एउटा ठुलो इस्लामिक कार्यक्रममा करिब दुई घन्टासम्म हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लमको जन्मघटनाको ब्याख्या गर्नुभएको थियो । आठ बर्षको उमेरमा अरबिक भाषामा एउटा किताब लेखेर सबैलाई आश्चर्य चकित बनाएका थिए। १४ शाबान १२८६ हिज्रिमा मदर्सा बाट पाइने धर्मगुरु (मौलाना) को प्रमाणपत्र पाएका थिए अर्थात् १३ बर्ष १० महिना ४ दिनमा एक मुकम्मल धर्मगुरु (मौलाना) बन्नुभएको थियो।

उहाँलाई शिक्षा दिने धर्मगुरु पिता मौलाना नकि अलि खान र मौलाना मिर्जा कादिर बैग अल-बरेल्वी हुन। रमजान महिना भरिमा उहाँले पबित्र धर्मग्रन्थ कुरान शरिफ कन्ठस्थ पार्नुभएको थियो । अठार बर्षको उमेरमा सैयदा इर्शाद बेगम सङग उहाँको बैबाहिक सम्बन्ध (निकाह) भएको थियो। उहाँले पहिलो पटक १२९५ हिज्रिमा तिर्थयात्रा (हज) गर्नुभएको थियो । त्यसबखत मक्काका वरिष्ठ धर्मगुरु हुसैन बिन सालेह रहम्तुल्लाह अलैहले उहाँको निधार (पेशानि) मा अल्लाह तआला को नुर देखेको जिकिर गर्दै उहाँलाई

"जियाउद्दिन अहमद" नामको उपनाम समेत दिनुभएको थियो । १३२३ हिज्रि मा गर्नुभएको आफ्नो दोस्रो एवम् अन्तिम तिर्थयात्रा (हज)को क्रममा करिब ८ घन्टा को अत्यन्त छोटो समयको अन्तरालमा ज्वरो आएको समयमा कुनै पनि किताब को सहायता बिनानै पैगम्बर सल्लल्लाहु अलैही वसल्लम सङग रहेको अदृश्य ज्ञान् (इल्मे गैब) को वारेमा **"अल-दौलह अल-मक्किया बिल-मदतिल गैबिया"** नामक किताब लेखेर सबैलाई चकित बनाउनुभएको थियो ।

२८ बर्ष २ महिना ५ दिन सम्म गुजार्नु भएको तेहौं शताब्दीको समय भने ५५ बिषयक्षेत्र भन्दा बढी तथा ५५ भाषामा गरि १००० भन्दा धेरै किताब हरु लेखी इस्लाममा अमुल्य योगदान दिन, धेरै कुराहरुमा खोजी गरि आफ्नो पहिचान बिश्वसामु बनाउन ब्यतित गर्नुभएको थियो। ३० भागमा बिभाजित २१,६५६ पेज भएको फत्वाको संग्रह फतावा रजविया पनि उहांले नै लेख्नुभएको थियो । चौधौं शताब्दी को ३९ बर्ष १ महिना २५ दिनको समय भने इस्लाम को झन्डा लहराउन ,इस्लाम फैलाउन , नयाँ गलत सोच बिचार आस्था को सामना गर्दै सत्य को प्रचारप्रसार गर्दै सत्मार्ग मा आउन अनुरोध गर्दै, गलत आस्था राख्ने लाई सम्झाउन र उनिहरुको पर्दाफास गर्न ब्यतित गर्नुभयो। बिश्वब्यापी रुपमा मन पराइएको **"मुस्तफा जाने रहमत पे लाखो सलाम"** पंक्ति नमाज पछि सबैभन्दा बढी पढिन्छ जुन उहाँ आफैले लेख्नुभएकोथियो। आला हजरत ले आफ्नो कलम बाट हाम्रा प्यारा उदार तथा दयालु पैगम्बर मुहम्मदुर रसुलुल्लाह सल्लल्लाहु अलैही वसल्लम को प्रशँसामा अनेकौं हृदयस्पर्शी नात (सर्बशक्तिमान अल्लाह मालिक बाट सम्मानित मुहम्मद सल्लल्लाहु अलैही वसल्लम को तारिफ मा पोखिने भावनात्मक कविता) हरु लेख्नु भएको थियो।

२५ सफरको दिन उहाँ एकदमै खुसी हुनुहुन्थ्यो किनकी सो दिन उहाँ सबैका प्यारा मुहम्मद सल्लल्लाहु अलैही वसल्लमसंग साक्षात्कारका लागि जादै हुनुहुन्थ्यो। २५ सफर १३४० हिज्रि (२८ अक्टाेबर १९२१ इस्वी) का दिन शुक्रबार जुम्माको नमाज (प्राथना) को बखत २:३८ मिनेटमा उहाँ इन्तकाल हुनुभएको थियो। उहाँको मजार शरिफ (कबर)बरेली शरिफ मा रहेको छ । हरेक बर्ष २४/२५ सफर को दिन उहाँको सम्झनामा कुरानको पाठ तथा विभिन्न इस्लामिक कार्यक्रम गरि उहाँको उर्श मनाउने गरिन्छ।

# इस्लामी तेस्रो महिना : रबिउल अव्वल

रबिउल अव्वलको अर्थ "बसन्तको पहिलो महिना" हो ।

रबिउल अव्वलको महिना चिसो सकेर भर्खर वसन्तको मौसम प्रवेश गर्ने समय, रुखहरुमा फुलहरु निक्लिन थालेको समय, रातको अध्यारो हटाउदै चिसो चिसो हवाले पुरा मक्काको मौसम नै सुमधुर बनाउदै मक्काका अग्ला अग्ला पहाडमा उज्यालो छरिदै गरेको समयमा सैयदा आमिना रदि अल्लाहु अन्हाको घर सम्पुर्ण संसारका लागि वरदान बनेर आउनु भएका हजरत मुहम्मद मुस्तफा सल्लल्लाहु अलैही वसल्लमको जन्म भएको थियो । जुन दिन हाम्रा नबि ए पाक सल्लल्लाहु अलैही वसल्लम को जन्म भयो त्यो दिन थियो इ.स. ५७१ अप्रिल २० तारिख र १२ रबिउल अव्वल सोमबारको दिन । कुनै किताबमा २१ या २२ अप्रिल ५७१ इ.स.  र ९ रबिउल अव्वल पनि लेखिएको पाइन्छ । तर मक्कावासि हरु यहि कुरा मान्दथे कि हाम्रो नबि १२ रबिउल अव्वलका दिन जन्मेका थिए । (मदारिजुन नबविय्यह भाग २ पा १४)

**इस्लाममा मिलादुन नबि  मनाउनु बिस्तृत रुपमा :**

मिलादुन नबि दुई शब्द मिलेर बनेको छ "मिलाद" र "नबि" । मिलाद शब्द "विलादत" बाट लिइएको हो जस्को अर्थ जन्म हुन्छ । अरबी भाषा अनुसार मिलाद शब्दको अर्थ जन्मको समय वा जन्मस्थान भन्ने बुझिन्छ । इस्लामी शरिअत अनुसार, नबिको जन्मको समय भएका घटनाहरुलाई स्मरण, वाचन वा याद गर्नुलाइ मिलादुन नबि भनिन्छ । हामीले यो दिन अल्लाहको नबिको जिवनीलाई पुन: सुन्ने सौभाग्य प्राप्त गर्छौं, वहाँको जिवनका मुख्य घटना, इस्लामी सिद्धान्त, सहाबाको जीवन र वहाँका योगदान बारे बिस्तृत रुपमा सुन्न र बुझ्न समेत पाउदछौ । मिलादुन नबि मुस्लिमहरुलाई अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमको बारेमा ज्ञान दिलाउन, वहाँको संदेश पुर्याउन एउटा उत्तम तरिका हो । हरेक धर्मगुरुले त्यो दिन अनिवार्य रुपमा अल्लाहका अन्तिम नबि सल्लल्लाहु अलैही वसल्लमको जिवन, वहाँको बानि, वहाँको प्रतिष्ठा बारे समस्त इस्लामी महानुभावहरुलाई अवगत गराउनु पर्दछ ।

रबिउल अव्वलको महिना अल्लाहको खुशीको लागि सद्का (दान) गर्ने सबै भन्दा राम्रो महिना मध्ये एक हो किनकि यस महिनामा अल्लाह तआलाले हामिलाई आफ्ना सबै भन्दा प्रिय नबि हजरत मुस्तफा सल्लल्लाहु अलैही वसल्लमलाई हामिहरु माझ पठाउनु भयो ।

**कुरआनमा मिलादुन नबि :**

१. हजरत इसा अलैही सलामले दुआ गर्नुभयो : ए अल्लाह ! ए रब ! हम पर आसमान से एक दस्तरख्वान उतार ताके हमारे लिए वह इद हो । (सुरह माइदा पारा ७ आयत ११४)

माथिको आयत बाट सजिलै थाहा पाउन सक्छौ कि जब हजरत इसा अलैहिस सलामको दुआ बाट अल्लाह तआलाले दस्तरख्वान को रुपमा एउटा उपहार पठाउनु भयो तब हजरत इसा अलैह सलामले त्यो दिनलाई इदको दिन बनाउनु भयो । अब एकपल्ट सोच्नुस, खाना ठूलो नेअमत हो कि अल्लाहका प्यारा नबिको जन्म ? निश्चितरुपमा अल्लाहको प्रिय नबिको जन्म नै ठूलो नेअमत हो त्यसैले वहाँको जन्मको दिन पनि इदको दिन हो र इद पनि त्यस्तो जुन हजारौ इद भन्दा नि उत्तम र प्रतिष्ठावान रहेको छ ।

२. अल्लाह पाक भन्नुहुन्छ : **"र आफ्नो रबको नेअमतको धेरै चर्चा गर !"** (पारा ३० सुरह दुहा आयत ११)

माथिको आयतमा खुलस्त रुपमा भनिएको छ कि अल्लाहको नेअमतको चर्चा गर्नुस् । अब आफ्नो दिलमा हात राखेर सोच्नुस्,के अल्लाहको नबिको जन्म भन्दा ठूलो यो उम्मतको लागि अरु केहि नेअमत हुन सक्ला त ? नि:शन्देह हुन सक्दैन । त्यसैले हामीले गरेका चर्चा यसै आयत माथि अमल गर्न गरेका हौ ।

**हदिसमा मिलादुन नबि :**

१. एक दिन अल्लाहको नबि मुहम्मद मुस्तफा सल्लल्लाहु अलैही वसल्लम मिम्बर माथी चढेर सोध्नुहुन्छ :" भन तिमिहरु, म को हुँ? "सबैले भन्छन: "तपाई अल्लाहको रसुल मुहम्मद हो" रसुलुल्लाह सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो : "म अब्दुल मुत्तलिबको नाति,अब्दुल्लाहको छोरा मुहम्मद हो । अल्लाह तआलाले सृष्टि निर्माण गर्नु भयो र हामिलाई सर्वश्रेष्ठ रचना बाट लिनुभयो, फेरि त्यस्को दुई भाग गर्नु भयो अरबी र अजमी । फेरि हामिलाई राम्रो अर्थात अरबीबाट लियौ र फेरि हामीलाई अरबको सबै भन्दा राम्रो समुह कुरैश बाट लिनु भयो ।" त्यहि पानामा अगाडि लेखिएको छ:" म सम्पुर्ण नबिहरुको अन्त्यमा आए र म हजरत इब्राहिमको दुआ, हजरत इसाको भनाइ र आफ्नो आमाको दर्शन हुँ जस्लाई उनिले मेरो जन्मको समय देख्नु भएको थियो कि एउटा नुर निक्लियो जस्को कारणले वहाँले शामको महल समेत देख्नु भयो । (मिश्कात शरिफ बाब फजाइले सैयदुल मुर्सलिन पा ५१२)

अल्लाहको नबिले आफ्नो जन्मको घटना देखि लिएर आफ्नो खान्दान बारे पुर्णरुपले भन्दिनु भयो, अब सायद नै कुनै प्रश्न रह्यो होला । यहि त मिलाद हो । अल्लाहको नबिले आफैले आफ्नो मिलाद मनाउनु भयो

। अब कसैले मिलाद मनाउनेलाई बिद्दती वा मुशरिक भन्छ भने त्यो उल्लु आफै एउटा ठूलो गधा भएको प्रष्ट हुन्छ ।

२. जब अबुजहलको मृत्यु भयो तब उस्को परिवारका केहि सदस्यले उस्लाई सपनामा नराम्रो अवस्थामा रहेको देखे । कसैले सोध्यो कि कस्तो हालत छ अहिले तिम्रो?अबु जेहलले जवाफ दियो, तिमिहरु बाट अलग भएर केही राम्रो छैन तर मैले आफ्नो कलमाको औला बाट पानी पाउछु जुन हातबाट मैले सौबियालाई दासीबाट मुक्त गरेको क थिए । (बुखारी शरिफ भाग ५ पा. १९६१ हदिष नं. ८४१३)

अल्लाहको नबिको जन्म भएको समयमा अबुलहबको सौबिया नामि नोकर्निले अबुलहबलाई उस्को भतिज मुहम्मदको जन्मको खबर सुनाएको थियो र खुशिको खबर दिएकाले अबुलहबले सौबियालाइ कलमाको औलाले रिहा गरेको संकेत दिएको थियो जस्को फाइदा उस्लाई जहन्नममा समेत भयो कि उस्लाई त्यो औलाबाट पानी पाई राख्ने गर्छ। अबुलहबले नबिको भनेर हैन, आफ्नो भतिजको जन्मको खुशीको खबर पाएको खुशीले उस्लाई त्यति फाइदा भएको छ जो कि काफिर र जहन्नमी हो भने हामी अल्लाहको रसुलको प्रेमीले अल्लाहको रसुल को जन्मको रुपमा खुशी भयौ र खुशीका साथ इस्लामी रुपले मिलादुन नबि मनायौ भने निश्चितरुपमा हजारौ फाइदा पाउने छौ ।

३. हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लमले आफ्नो जन्म रोजा राखेर मनाउनु हुन्थ्यो । मुस्लिम शरिफको हवाला दिएर इमाम वलि उद दिन रहमतुल्लाह अलैह भन्नुहुन्छ-" अल्लाहको नबिलाई एक पल्ट प्रश्न गरियो कि तपाई सोमबारको दिन किन रोजा राख्नुहुन्छ ? अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमले जवाफ दिनु भयो "किनकि यसै दिन मेरो जन्म भएको थियो र कुरआन पनि यसै दिन अवतरित भएको थियो ।" (मिश्कात शरिफ पाना १७९)

यस्ता सयौ हवालाहरु छन् जसबाट अल्लाहको नबिको मिलाद साबित हुन्छ । तर यो किताबको मुख्य बिषय यो नभएको कारणले यहाँ केही मात्र उल्लेख गरेको छु । इन शा अल्लाह, अल्लाह पाकले तौफिक दिनु भयो भने आउने समयमा बिस्तृत रुपमा मिलादुन नबिको शिर्षकमा एउटा छुट्टै किताबको रचना गर्ने छु ।

### रबिउल अव्वलमा भएको मुख्य घटनाहरु :

• यसै महिनाको १२ तारिखमा हाम्रो आका सम्पुर्ण संसारको दाता, हुजुर सैयदुल अंबिया सैयदुना व मौलाना, हजरत मुहम्मद मुस्तफा सल्लल्लाहु अलैही वसल्लमको जन्म भएको थियो ।

• यसै महिनामा अल्लाहको नबिको वफाते जाहिरी भएको थियो । इस्लामि हिजरीको ११औ बर्ष सोमबारको दिन वफात भएको कुरा सम्पुर्ण इतिहासकारहरुले बताउदछन् तर कसैले १२ तारिख बताछन् भने कसैले ९ या १३ समेत उल्लेख गरेको भेटिन्छ ।

• यसै महिनामा हजरत अबु बकर रदिअल्लाहु अन्हु इस्लामी संसारका पहिला खलिफा नियुक्त भएका थिए ।

• हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लमको छोरी उम्मे कुल्सुम रदिअल्लाहु अन्हु र हजरत उस्माने गनिको निकाह यसै महिनाको  ३ हिजरीमा भएको थियो ।

• हजरत मुहम्म्द सल्लल्लाहु अलैही वसल्लमको छोरा आदरणीय सैयदुना इबराहिम रदिअल्लाहु अन्हुको इन्तेकाल पनि यसै महिनाको  १० हिजरीमा भएको थियो ।

• २८ रबिउल अव्वलको दिन आदरणीय मुर्शिद, हजरत मुफ्ति ए आजमे नेपाल शेर ए नेपाल मुफ्ती जैश मुहम्मद सिद्दिकी रह्मतुल्लाह अलैहको इन्तेकाल भएको थियो।

**१२ रबिउल अव्वलको दिन गरिने कार्यहरु :**

• नफल पढ्ने:

१. इशाको नमाज पछि २-२ रकअत गरेर १२ रकआत नफिल पढ्ने यसरी कि शुरह फातिहा पछि २१ पल्ट शुरह इख्लास पढ्ने।

२. दुई रकअत नफल , शुरह फातिहा पछि एक पल्ट शुरह मुजम्मिल मिलाएर पढ्ने

३. दुई रकआत नफल  शुरह फातिहा पछि तीन पल्ट शुरह इख्लास मिलाएर पढ्ने

• अल्लाहको नबि हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लमको प्रेममा धेरै भन्दा धेरै दुरुद पढ्ने:

१) दुरुदे इब्राहिमी : अल्लाहुम्म सल्लि अला मुहम्मदिव व अला आलि मुहम्मद  कमा सल्लैत अला इब्राहीम व अला आलि इब्राहीम इन्नक हमीदुम मजीद।  अल्लाहुम्म बारिक अला मुहम्मदिव व अला आलि मुहम्मद । कमा बारकत अला इब्राहीम व अला आलि इब्राहीम इन्नक हमीदुम मजीद ।

२) दुरुदे ताज : अल्लाहुम्म सल्लि अला सय्यिदिना व मौलाना मोहम्मदीन

साहिबित्ताज़े वल मेराजे वल बुराके वल अलम । दाफेईल बलायें वल वबाई वल कहति वल मरजि वल अलम । इस्मोहु मक़तूबुम मरफ़ूउम मशफ़ुउम मनकुसुन फ़ील लौहि वल क़लम । सय्यिदिल अरबी वल अज़म जिस्मोहु मुक़द्दसुन मुअत्तरुन मुतहहरुन मुनव्वरुन फ़ील बैति वल हरम ।शमशुद्दुहा बदरुददुजा सदरिलउला नूरीलहुदा कहफ़िलवरा मिस्बाहिज़ ज़ुलम ।जमिलिस्सीयम शफ़ीईल उमम सहिबिल जुदी वल करम । वल्लाहु आसिमोहु जिब्रीलो खादिमुह वल बुर्राको मर्कबुहु वल मेराजो सफ़रोहु व सिदरातुल मुंतहा मकामोहु । व क़ाबा क़व्सैनी मतलूबुह वल मतलुबुह मक़सुदुह वल मक़सुदुह मोजूदुह । सय्यिदिल मुरसलीन ख़ातिमिन नबीय्यीन शफ़ीईल मुज़नबीन अनिसिल ग़रीबिन । रहमतूल्लील आलमीन राहतिल आशेक़ीन मुरादिल मुश्ताक़ीन शमशील आरिफ़िन । सिराजिस सालिकीन मिस्बाहिल मुक़र्रबीन मोहिब्बुल फुक़राए वल गुरबाए वल मसाक़ीन । सय्यिदिस शक़लैन नबिय्यील हरमैन इमामिल किब्लतैन। वसिलतना फिद्दारैन साहिबे क़ाबा कौसेन । महबूबे रब्बुल मशरीकैन व मग़रिबैन । जद्दील हसनी वल हुसैन मौलाना व मौलस शकलैन ।अबिल क़ासिमि मोहम्मद ﷺ इब्ने अब्दुल्लाह नूरुममिन नूरिल्लाह । या आय्योहल मुश्ताकुन बिनुरी जमालेही । सल्लु अलैही व आलेही व अस्हाबेहि व सल्लीमो तस्लीमा ।

३) दुरुदे गौषिया : अल्लाहुम्म सल्ले अला सय्यिदीना व

मौलाना मोहम्मदिम मादिनील जुदी वल

करमी व आलेही व बारीक वसल्लिम

४) दुरुदे रज्विया : सल्लल्लाहु अलन नबिय्यिल उम्मिय्यी व आलिही व बारिक वसल्लम • सलातौ वस्सलामन अलैक या रसुलल्लाही सल्लल्लाहु अलैही वसल्लम

## चौथो इस्लामी महिना : रबिउल आखिर

अर्थ : रबिउल आखिरलाई रबिउष षानी पनि भन्ने  गरिन्छ । यो महिनाले वसन्त मौसमको अन्त्यलाई जनाउने गर्दछ ।

### यस महिनामा भएका घटनाहरु :

१) ११ रबिउल आखिर: औलियाका सरदार, पिराने पिर गौषे आजम शैख अब्दुल कादिर जिलानी रह्मतुल्लाह अलैहको इन्तेकालको दिन

२) १८ रबिउल आखिर: ख्वाजा निजामुद्दिन औलिया रह्मतुल्लाह अलैहको इन्तेकालको दिन

३) २८ रबिउल आखिर: शैखे अक्बर मुहिय्युद्दिन इब्नुल अरबी रह्मतुल्लाह अलैहको इन्तेकालको दिन

**यस महिनामा गर्ने इबादत :**

• ग्यारहवीं शरीफ

हज़रत गौषे आजम शैख अब्दुल कादिर जीलानी रहमतुल्लाहि अलैह को महानता र उहाँको प्रतिष्ठा बयान गर्नको लागि इसाले सवाबको मेह्फिल गरिने गरिन्छ । हदीष शरीफमा छ की असल बन्दाहरु को बारेमा बयान गरिएको समय रहमत र बरकतको बर्षा हुने गर्दछ । (कश्फुल हुफा भाग २ पा ६७)

मेह्फिल गर्नु राम्रो हो । मेह्फिलहरुमा हुजूरे अकरम सल्लल्लाहु अलैही वसल्लम को फजाइल र उहाँ सल्लल्लाहु अलैही वसल्लमको प्यारो जिवनी बयान हुने गर्छ। मिलाद शरीफ को जस्तै मेह्फिले इसाले सवाब पनि मुबारक र बरकतवाला हुन्छ र जल्सामा उपस्थित सबैले षवाब कमाउने गर्छन् ।

ग्यारहवीं शरीफ को वास्तविक हजरते गौषे आज़म सय्यिदुना शैख़ अब्दुल क़ादिर जीलानी रहमतुल्लाहि अलैह को रूह-ए-अक़दस मा इसाल-ए-सवाब गर्नु हो ।

**ईसाले सवाब :**

कुरआन करिम को तिलावत वा कलिमा वा नफ्ली नमाज अथवा कुनै पनि इबादतको षवाब अरु व्यक्ति सम्म पुर्याउनु जाइज हो । यसैलाई साधारण भाषामा फातिहा दिनु अथवा इसाले सवाब भनिन्छ । इस्लाम र सुन्नतको किताबहरुमा यसलाइ बयान गरिएको छ । यसलाई बिद्दत र नाजाइज भन्नु मुर्खता हो ।

**हदीशमा पनि इसाले सवाब जाइज हुनुको प्रमाण छ:**

हज़रते सा'द बिन उबादा सहाबी रदि अल्लाहु अन्हु को आमा को जब इन्तिकाल भयो तब उहाँले अल्लाहको नबि सामु उपस्तिथ भएर प्रश्न गर्नु भयो कि या रसूलल्लाह सल्लल्लाहु अलैही वसल्लम मेरी आमाको इन्तिक़ाल भईसक्यो उहाँको लागि कुन सद्का उत्तम हुन्छ ? हुजूरे अक्दस सल्लल्लाहु अलैही वसल्लम ले

भन्नुभयो: पानि उत्तम सदका हो, हज़रते सा'द रदि अल्लाहु अन्हाले अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमको आदेश सुनेर इनारको निर्माण गर्नु भयो र भन्नुभयो यो इनार सा'द की आमा को लागि हो अर्थात: यसको षवाब उन्को रूहलाई मिल्नेछ। (मिश्कातुल मसाबिह किताबुल जकात भाग १ पा. ५२७)

## पाचौ इस्लामी महिना : जमाद उल अव्वल

अर्थ : जमादको अर्थ "जमाउने" हुन्छ। महिनाहरुको नामकरण गर्ने समयमा यो महिनामा चिसोको कारणले पानी जम्ने भएकोले यस महिनालाई जमाद उल अव्वल भनिन्छ।

### यस महिनामा भएका इस्लामी घटनाहरु :

१) हुजुर सल्लल्लाहु अलैही वसल्लम र मुअमिनिनहरुको आमा सैयदा तैयबा बिबि खदिजा रदिअल्लाहु अन्हाको निकाह यही महिनामा भएको थियो।

२) इस्लामी ८ हिजरीको यसै महिनामा **"मोता को युद्ध"** भएको थियो जसमा हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लम जानुभएको थिएन। यो युद्धको नाम सिरियाको एउटा ठाउँ मोता बाट पर्न गएको थियो जस्मा हजरत जैद बिन हारिस रदि अल्लाहु अन्हुलाई अल्लाहको नबिले जनरल बनाउनु भएको थियो ।

३) त्यसै मोताको युद्धमा हजरत जैद बिन हारिस शहिद हुनुभयो र वहाँ पछि पनि २ सहाबा जनरलको रुपमा लडेर शहिद हुनुभयो र अन्त्यमा हजरत खालिद बिन वलिद रदि अल्लाहु अन्हु जनरल बनेर युद्ध लड्नु भयो। अन्तत: अल्लाह तआलाले वहाँलाई बिजयि बनाउनु भयो। सोही युद्धमा अल्लाहको नबि हुजुरे अकरम सल्लल्लाहु अलैही वसल्लमले वहाँलाई **"अल्लाहको तलवार"** जस्तो गरिमामय उपनाम प्रदान गर्नु भयो।

४) ५ जमाद उल अव्वलको दिन हजरत मुहम्मद मुस्तफा सल्लल्लाहु अलैही वसल्लमको नातिनी हजरत अलि रदि अल्लाहु अन्हु र फातिमा रदि अल्लाहु अन्हाको छोरी सैयदुना आमा जैनब रदि अल्लाहु अन्हाको जन्मभएको थियो।

## इस्लामी छैठौं महिना : जमाद उल आखिर

### यस महिनामा भएको मुख्य घटनाहरु :

• ५ जमाद उल आखिरमा अल्लामा जलालुद्दिन रुमि रहमतुल्लाह अलैह (तुर्की) को इन्तेकाल भएको थियो ।

• इस्लामी ८ हिजरीको यही महिनामा सलासिलको युद्ध भएको थियो ।

• १४ जमाद उल आखिरमा इमामे गजाली रहमतुल्लाह अलैहको इन्तेकाल भएको थियो ।

• २० जमाद उल आखिरमा खातुने जन्नत, अल्लाहको प्यारा रसुल सल्लल्लाहु अलैही वसल्लमकि छोरी बिबि फातिमा रदि अल्लाह अन्हाको जन्म भएको थियो ।

• २२ जमाद उल आखिरमा इस्लामको पहिलो खलिफा अमिरुल मुअमिनिन सैयदुना अबुबकर सिद्दिक रदि अल्लाहु अन्हुको इन्तेकाल भएको थियो ।

• २३ जमाद उल आखिरमा सैयदुना उमर बिन खत्ताब रदि अल्लाहु अन्हु इस्लामको दोश्रो खलिफा नियुक्त हुनुभएको थियो ।

## इस्लामी सातौं महिना : रजब

अर्थ : रजबको अर्थ "आदर गर्नु" हुन्छ ।

अरबका बासिन्दाहरुले यो महिनालाई निकै पवित्र मान्दथे र यस्को आदर गरेका हुनाले पनि यस्को नाम रजब राखिएको पाइन्छ । यसको नाम जन्नतको एउटा खोला **"रजब"** जस्को पानि मह भन्दा मिठो र गुलियो रहेको छ त्यही रजब खोलाको नाममा राखिएको कुरा पनि इतिहासकारहरु द्वारा प्रमाणित छ । जस्ले यो महिनामा रोजा राख्ने छ त्यो व्यक्तिलाई त्यही खोला बाट पानि पिउने सौभाग्य प्राप्त हुनेछ।

**रजबको बिशेषता हदिषमा :**

हजरत मुहम्मद सलल्लाहु अलैही वसल्लमले भन्नुभयो ,"निश्चय नै रजब अल्लाहको महिना हो, शाबान मेरो महिना हो र रमजान मेरा उम्मतीको महिना हो।( हदिष)

सैय्यदना सलमान फारसी रदिअल्लाहु अन्हुबाट कथन छ कि हुजुर सलल्लाहु अलैही व सल्लमले भन्नुभयो, "रजबमा एक यस्तो दिन र एक यस्तो रात छ कि जसले त्यस दिन रोजा राख्यो र त्यो रात

जाग्रम बस्यो उसले सय बर्ष रोजा राख्यो र सय बर्ष रात भरी इबादत गर्यो र त्यो रजबको सत्ताइसौं रात हो ।(बह्की)

अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो ,"नि:शन्देह रजब एउटा उत्तम महिना हो किनकी यस्मा गरिएको एक नेकिको सवाब दोब्बर पाउनेछ र जस्ले यसको एक दिन रोजा राख्छ उस्ले एक बर्ष रोजा राखेको सवाब पाउनेछ। (मा सबात मिनस सुन्नह पा १२६)

हजरत सैयदुना अल्लामा सफुरी रह्मतुल्लाह अलैहले भन्नुहुन्छ कि ,"रजब बीउ रोप्ने महिना हो, शाबान बिउमा पानि हाल्ने र रमजान फसल काट्ने महिना हो । जस्ले रजबमा इबादतको बीउ रोप्दैन, शाबानमा आँखा बाट आँसु बहाउदैन भने उस्ले रमजानको रहमत फसलको फसल कसरी काट्न सक्छ ।(नुज्हतुल मजालिस भाग १ पा २०९)

**रजबको दुआ:**

अल्लाहुम्म बारिक लना फि रजब व फि शाबान व बल्लिग्ना रमजान

**रजबमा भएको मुख्य घटनाहरु :**

१) हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लमलाइ २७ रजबको राती मेअराज गराइएको थियो ।

२) तबुकको युद्द इस्लामी ९ हिजरीको यसै महिनामा भएको थियो । यो हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लम उपस्थित हुनुभएको अन्तिम युद्द हो ।

३) ख्वाजा गरिब नवाज रह्मतुल्लाह अलैहको इन्तेकाल ६ रजबमा भएको थियो ।

४) अमिरुल मुअमिनिन हजरत अलि रदि अल्लाहु अन्हुको जन्म १३ रजबमा भएको थियो ।

**शब-ए-मेअराज:**

रजबको सताइसौं रातमा सिद्राको दुल्हा हजरत मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई अल्लाह तआलाले हजरते जिब्रईल अलैहिस्सलामलाई पठाएर यो सम्पूर्ण धर्ती तथा आकाशको खुल्ला आँखाको साथ मेअराज (भ्रमण/यात्रा) गराउनु भयो । अल्लाहको आदेशानुसार हजरत जिब्रईल अलैहिस्सलामले जन्नतबाट नूरानी (रोशनदार) "बुराक" नामक (घोडा भन्दा सानो गधाभन्दा केही ठुलो एक प्रकारको

जनावर) सवारी लिएर मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम को सेवामा हाजिर हुनुभयो । उक्त सवारीमा मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम बाहेक अन्य कोही सवार भएका थिएनन् । अल्लाहले उक्त यात्रा गराउनुको मुख्य उदेश्य थियो आफ्नो दीदार गराउनु । हुजुर सल्लल्लाहु अलैहि वसल्लम त्यति बेला हजरते उम्मे हानी रदि अल्लाहु अन्हाको घरमा आराम गर्दै हुनुहुन्थ्यो । हजरत जिब्रईल अलैहिस सलाम प्रिय नबि हजरत मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम को बाँया खुट्टामा आफ्नो ओठलाई लगाउनु भयो उनको चिसो ओठको चिसोपनले मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमले आफ्नो आँखा खोल्नु भयो । उक्त यात्रा गराउनु पूर्व उहाँको छातीलाई चिरियो । उहाँको मुटुलाई धोईयो र पुन: प्रत्यारोपण गरियो । उहाँलाई मस्जिद-उल-हरम (काबा) देखी मस्जिद उल अक्साको तर्फ यात्रा गराउनु भयो। जाने आउने बेलाको समय अती थोरै थियो । त्यहाँ सम्पुर्ण नबिहरुलाई नमाज पढाउनु भयो । अनि आकाश तर्फको आफ्नो भ्रमणको यात्रा प्रारम्भ गर्नु भयो ।

जब आकाशमा पुग्नुभयो पहिलो आकाशमा हजरते आदम अलैहिस्सलाम, दोस्रोमा हजरते ईशा र हजरते याहिया, तेस्रोमा हजरते यूशुफ, चौथोमा हजरते इद्रिस, पाँचौंमा हजरते हारून, छैठौंमा हजरते मुसा र सातौंमा अबुल अंबिया हजरते इब्राहिम अलैहिमुसलातो वसल्लमले हजरत मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको स्वागत गर्नुभयो । अनि प्रिय नबि सल्लल्लाहु अलैहि वसल्लम लाई जन्नतको भ्रमण गराइयो । फेरि नबि सल्लल्लाहु अलैहि वसल्लमलाई सिद्रातुल मुनतहाको भ्रमण गराइयो । जिब्रईल अलैहिस्सल्लम त्यहाँ नै रोकिनु भयो । अन्ततः आका सल्लल्लाहु अलैहि वसल्लम अर्शे आजम माथि पुग्नुभयो सम्पूर्ण पर्दा हटाईयो र खुला आँखाले अल्लाह अज्ज-व-जल्लको दीदार गर्नु भयो । अल्लाह यति नजिक हुनु भयोकी उहाँहरु बिच कुनै फासला (दुरि) नै रहेन । अल्लाह र आका सल्लल्लाहु अलैहि वसल्लम को कुरा हुँदा तेस्रो कोही थिएन।

यस रातको अज्मत (गरिमा) धेरै ठुलो छ । यस रातमा मुहम्मद सल्लल्लाहु अलैही वसल्ल्मलाई तीन अती महत्वपूर्ण उपहारहरु अल्लाहले दिनु भएको थियो ।

१) सुरह बक्रहको अन्तिम तिन आयत ।

२) नेक उम्मत मा जसले शिर्क नगरोस् उसलाई जन्नत दिनेछु ।

३) पाँच समयको नमाज (अल्लाहबाट ५० वक्तको नमाज फर्ज गरिएको थियो तर आका सल्लल्लाहु अलैहि वसल्लम को आग्रह पश्चात पाँच वक्त फर्ज भयो । अत: यसको सवाब मा भने कुनै कमी नआउने र ५० वक्त कै नमाज बराबरको सवाब पाउँछन भन्ने समेतको हुकुम भयो ।

अल्लाह अज्ज-व-जल्ल र उसको प्यारो आका सल्लल्लाहु अलैहि वसल्लमका बिच के कुराहरु भए त्यो केवल उहाँहरुलाई मात्र थाहा छ । यस शब-ए-मेअराजको दावा आका सल्लल्लाहु अलैहि वसल्लम ले गर्नु भएको हैन । यसको पुष्टी स्वयं अल्लाह अज्ज-व-जल्लले कुरआनमार्फत गरिदिनु भएको छ।

**मेअराजको राती गरिने इबादतहरु :**

(क) नफल पढ्ने

•४-४ रकअत गरेर १२ रकअत नफलको नमाज पढ्ने।

तरिका:  सुरह फातिहा पछि सुरह कदर ३ पल्ट पढ्ने र हरेक सलाम पछि २७ पल्ट यो दुआ पढ्ने; ला इलाह इल्लाल्लाहु मालिकुल हक्कुल मुबिन र १११ पल्ट दुरूदे इबराहिमी [नमाजमा पढिने दुरुद] पढ्ने ।

•२  रकअत  नफल पढ्ने।

तरिका:  हरेकमा सुरह फातिहा पछि ४ कुल अर्थात [शुरह काफिरुन, शुरह इख्लास, शुरह फलक र शुरह नास पढ्ने] र सलाम पछि १११ पल्ट दुरुदे इबराहिमी पढ्ने

•२ रकअत नफल पढ्ने।

तरिका: हरेक रकअतमा शुरह फातिहा पछि १ पल्ट शुरह कुरैश पढ्ने।

•२-२ रकअत गरेर १० रकआत नफल पढ्ने।

तरिका: शुरह फातिहा पछि जुन शुरह पनि मिलाउन सकिन्छ ।

यो दिन हाम्रो नबिको वसिला लिएर अल्लाहपाकको दरबारमा दुआ गर्ने

(ख) रोजा राख्ने

अल्लाहको नबि हुजुरे अकरम सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो ," रजबमा राखिने रोजाको धैरै महत्व छ खास गरि २७औ रजबमा राखिने रोजाको किन कि यस्को बरकतले त्यो व्यक्ति कबर र जहन्नमको अजाब बाट सुरक्षित रहनेछ ।"

(ग) मिलादको कार्य क्रम गर्ने या सहभागी हुने।

(घ) मजार र कबरहरु मा जाने।

(ङ) धैरै भन्दा धैरै दुरुद र सलाम पढि राख्ने।

## आठौ इस्लामी महिना : शाबान

अर्थ : शाबानको अर्थ "बाड्नु" । यो महिनामा हरेक मानिस बिच रहमत र बरकत बाड्ने गरिन्छ ।

**शाबान भनेको के हो ?**

शाबान,रजब र रमजान बिचको महत्वपूर्ण  महिना हो । इस्लामी हिजरीका केही उत्तम दिन र रातहरु छन् जस्मा अल्लाह तआलाले आफ्नो प्यारो नबि हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्ल्म माथी खास कृपा गर्नुभएको छ । अल्लाह तआलाले हामीहरु संग वाचा गरेका छन् कि यदि कसैले सानो भन्दा सानो नेकि पनि त्यो दिनहरु मा गर्छ भने अल्लाह तआलाले त्यो नेकिको नि धैरै सवाब लेख्दिनु हुनेछ । हरेक दिनको केही भागमा अल्लाह तआला आफ्नो रहमत र बरकतको ढुकुटीका साथ सारा जगत माथी नजर गर्नु हुन्छ र जस्ले वहालाई स्मरण गरि रहेको हुन्छ उस्को जवाफ दिनु हुन्छ । वहाँले आफ्नो अपार रहमत र बरकतले आफ्नो गुनहगार बन्दाहरुको बख्शिस गराउन केही दिनहरु रोज्नु भएको छ । त्यही दिनहरु मध्ये शाबानका दिनहरु पनि एक हुन् ।

**हदिष अनुशार शाबानको महत्व:**

१) प्यारा नबि सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो ; "शाबान मेरो महिना हो र रमजान अल्लाहको महिना हो ।" (जामेअ सगिर, हुर्फुल् शिन , पा. ३०१ हदिष ४८८९)

२) हजरत सैय्यदुना उसामा रदि अल्लाहु अन्हुले बर्णन गर्नुभयो कि अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो : "रजब र रमजान बिच एउटा महिना छ जस्लाई शाबान भनिन्छ । मानिसहरुले यस महिनालाई वास्ता गर्दैनन् जब कि यो महिनामा अल्लाह तआलाले धैरै उपहार प्रदान गर्नु हुन्छ र यसै

महिनामा उनिहरुको कार्य (राम्रो/नराम्रो) अल्लाह सामु पेश हुने गर्दछ ।(यो हदिषलाई इमाम बहकीले आफ्नो किताब सएबुल इमाममा उल्लेख गर्नु भएको छ)

**शाबानमा घटेको मुख्य घटनाहरु :**

१) १५ शाबानको दिन "शबे बरात" मनाईने गरिन्छ ।

२) "किब्ला" केही समयको लागि मस्जिद ए अक्सा भए पछि हिजरतको दोश्रो बर्ष १५ शाबानमा पुन: कआबालाई किब्ला बनाइएको थियो ।

३) हिजरतको दोश्रो बर्ष २५ शाबानमा रमजानको रोजा फर्ज गरिएको थियो ।

४) १ शाबान हजरत अलिको छोरी  सैयदा जैनबको जन्म भएको दिन।

५) ३ शाबान हजरत इमाम हुसैनको जन्म भएको दिन।

६) हिजरतको तेस्रो बर्ष हजरत हफ्सा र प्यारा नबि सल्लल्लाहु अलैही वसल्लमको यहि महिनामा निकाह भएको थियो ।

७) यसै महिनामा अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमको छोरी उम्मे कुल्षुम रदिअल्लाहु अन्हाको इन्तेकाल भएको थियो ।

**शबे बरात**

शाबान को पन्ध्रौ रातलाई शबे बारात भनिन्छ जस्मा गुनेहगारहरुले जहन्नमबाट छुट्कारा पाउने गर्दछन् |

• हजरत इब्ने अब्बास रदिअल्लाहु अन्हु बाट वर्णन गरिएको छ "सम्पूर्ण हिसाब किताबको निर्णय शाबान को पन्ध्रौ रातमा हुन्छ (रूह उल मआनी १४ पेज १७४)

• मुअमिनहरुको आमा सैयदा आईशा सिद्दिका रदि अल्लाहु अन्हाले वर्णन गर्नु हुन्छ कि अल्लाहको नबि हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लम ले भन्नुभयो   :-अल्लाह तआलाले  खास गरि चार रात मा रहमत को ढोका खोल्नु हुन्छ :

१ :बकर ईद को रात

२: इदुल फित्र को रात

३:शाबान को पन्ध्रौ रात यस रातमा मृत्यु हुनेहरु को नाम, मानिसहरु को रिज्क (अन्न) र यस साल हज गर्ने हरुको नाम लेखिन्छ

४: अरफात को अर्थात ८ र ९ जुल हिज्जा को बिच रात देखि फजर को अजान सम्म (तफ्सिर दुर्रे मनषुर भाग ७ पा. ४०२)

• हजरत सैयदा आइशा सिद्दिका रदि अल्लाहु अन्हाले भन्नुहुन्छ कि प्यारा नबी सल्लल्लाहु अलैही वसल्लम ले भन्नुभयो "म सामु जिब्रैइल अलैहिस सलाम आएर भन्नुभयो कि यो शाबन को पन्ध्रौ रात हो, यस रातमा अल्लाह तआलाले जहन्नम बाट यती धेरै जहन्नमीलाई आजाद गर्नुहुन्छ जती "बनी कल्ब" को बाख्राहरु को कपाल छन तर काफिर, नाता तोड्ने, आमाबाबा को आदेश नमान्ने वाला र रक्सी पिउने व्यक्तितर्फ रहमत को नजर फर्माउनु हुदैन | (शुएबुल इमान)

• हजरते सय्यिदुना कसिर बिन मुर्रह रदिअल्लाहु अन्हु बाट वर्णन गरिएको छ कि प्यारा रसुल सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो: अल्लाह तआलाले शाबान को पन्ध्रौ रातमा **“मुश्रिक र धेरै झगडागर्ने व्यक्ति"** बाहेक सबै पृथ्वीमा बस्नेहरुलाई माफी दिनुहुन्छ | (शुएबुल इमान भाग ३ पा ३८१ हदिष ३८३०)

**शबे बरातमा गरिने इबादतहरु :**

• मगरिब पछि ६ रकअत नफल पढ्ने

शबे बराअत को रात मग्रिब को फर्ज र सुन्नत आदि नमाजहरु पछि ६ रकअत नफ्ल नमाज २ -२ रकअत गरी पढ्ने तरिका हाम्रा औलियाहरु बाट प्रमाणित रहेको छ। पहिलो २ रकअतको नियत यसरी गर्नुस् 'ए अल्लाह तआला यो दुई रकअत नमाज को बरकत बाट मलाई इज्जतवाला लामो आयु प्रदान गर्नुहोस् ।

दोस्रो २ रकअत मा यसरी निय्यत गर्नुस् 'ए अल्लाह तआला यो दुई रक्अत नमाज को बरकत बाट मलाई आउने आपत दु:ख बाट रक्षा गर्नुहोस्' ।

तेस्रो २ रकअत मा यसरी निय्यत गर्नुपर्दछ 'ए अल्लाह तआला यो दुई रक्अत नमाज को बरकत बाट मलाई तपाईं भन्दा अरु माथि निर्भर नबनाउनुस् अर्थात मलाई केबल तपाईं को भर पर्ने वाला बनाउनुहोस् ।'

उल्लेखित ६ रकअत मा सुरह फातिहा पछि कुनै पनि सुरह पढ्न सकिन्छ तर हरेक रकअतमा सुरत फातिहा पछि तीन -तीन पटक सुरतुल इख्लास सरीफ पढ्नु राम्रो हो । हरेक २ रकअत पछि २१ पटक सुरतुल

इख्लास  वा १ पटक  यासिन शरीफ पढ्नुहोस् वा सकेसम्म दुबै पढ्नुहोस् या एकजना ले यासिन सरीफ तिलावत  गरेर अरु ले सुन्दा पनि हुन्छ ।

हरेक पटक यासिन सरीफ पछी "नीस्फे शबान "को दुवा पनि पढ्नुहोस ।

**दुआ निस्फे शाबान**

बिस्मिल्ला हिर्रहमान निर्रहीम

अलाहुम्मा या जल मन्नि  वला यमुत्रु अलैहि 0  या जलजलालि वल इकराम 0 या जत्तोलि वल इनआम 0 ला इलाहा इला अन्ता ज़हरल्लाजीन 0  वजारल मुस्तजिरीन व अमानल खाइफीन 0 अल्लाहुम्मा इन कुन्ता कतब तनी इन्दका फी उम्मिल किताबि शकीय्यन औ महरूमन ओं मतरुदन औ मुक़त्तरन अलय्या फिरिज्क़ 0 फ़म्हु अल्लाहुम्मा बि फ़दलिका शकावती व हिरमानी व तर्दी वक तितारि रिज़्क़ी 0 व सबितनी इन्दका फी उम्मिल किताबि सईदम मरजूकम मुवफ्फक़ल लिलखैरात 0 फ इन्नका कुल्ता व कौलुकल हक़्क़  फी क़िताबिकल मुन्जल 0 अला लिसानि नबीय्यिकल मुरसल 0 यम्हुल्लाहु मा यशाउ अयूस्बितु व इन्दहू उम्मुल किताब 0 इलाही बीतजल्लि यिल अअज़म 0 फी लैलतिन्निस्फे मिन शहरि शअबानुल मुक़र्रमल्लती  युफ़ रकु फीहा कुल्लु  अमरिन हकीमिंव व युबरम 0 अन तकशिफा अन्ना मिनल बलाइ वल बलवाई मा नअलमु वमाला नअलम वमा अन्ता बिही अअलम 0 इन्नका अन्तल अअज़्ज़ुल अकरम 0 वसल्ललाहो तआला अला सय्यिदिना मुहम्मदिव व अला आलिही व सहबिहीँ व सल्लम 0 वल हम्दु लिल्लाहि रब्बिल  आलमीन 0

**• कबरहरुमा जानु**

उम्मुल मुअमिनिन आमा आइशा सिद्दिका रदि अल्लाहु अन्हा भन्नुहुन्छ : एक रात मैले अल्लाहको नबी सल्लल्लल्लाहु अलैही वसल्लमलाई देखिन तब मैले वहाँलाई बकिअ (कबरिस्तान) मा पाए । अल्लाहको नबिले मलाइ भन्नुभयो : "के तिमिलाइ यो कुराको डर थियो कि अल्लाह र उस्को रसुल तिम्रो हकलाई छोड्नु हुनेछ ? मैले उत्तर दिए : ए अल्लाहको रसुल सल्लल्लाहु अलैही वसल्लम ! मैले सोचेको थिए कि सायद हजुर कुनै अरु अज्वाज (श्रीमती) संग हुन्हुन्छ ।

तब अल्लाहको प्रिय रसुलले भन्नुभयो :" निश्चित रुपमा ! अल्लाह शाबानको १५ औ रातमा यस संसार माथि नजर गर्नुहुन्छ र यस रातमा अल्लाह तआलाले जहन्नम बाट यति धेरै जहन्नमीलाई आजाद गर्नुहुन्छ जती "बनी कल्ब "को बाख्राहरु को कपाल छन् ।(सुनन तिरमिजी भाग २ पा १८३ हदिष ७३९)

**• दुरुद पढ्ने**

अल्लाहको नबि हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लम को उत्तम आदेश रहेको छ," ए मानिसहरु ! नि:शन्देह कयामतको दिन त्यस्को प्रकोप र हिसाबकिताब बाट चाडै छुट्कारा पाउने ब्यक्ति त्यो हुनेछ जस्ले तिमीहरु मध्ये म माथि संसारमा निरन्तरताका साथ धेरै दुरुद पढेको हुनेछ।"

• धेरै भन्दा धेरै कुरआनको तिलावत र जिक्र गर्ने

• नफल पढ्ने

१) शबे बरातको दुई रकअत नफल नमाज यसरी पढ्ने कि हरेक रकअतमा शुरह फातिहा पछि १ पल्ट आयतुल कुर्सी र १५ पल्ट सुरह इख्लास (कुल हुवल्लाहु अहद) पढ्ने । दुई रकअत पछि १०० पल्ट दुरुद पढ्नुस ।

२) शबे बरातको आठ रकअत नफल २-२ रकअत गरि यसरी पढ्ने कि हरेक रकअतमा सुरह फातिहा पछि १ पल्ट शुरह कद्र र २५ पल्ट शुरह इख्लास पढ्ने

३) शबे बरातको ८ रकअत नफल २-२ गरेर यसरी पढ्ने कि हरेक रकअतमा सुरह फातिहा पछि १० पल्ट शुरह इख्लास पढ्ने

नमाज पछि हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लम, सैयदा फातिमा रदि अल्लाहु अन्हा र सम्पुर्ण सहाबा र औलियाको वसिलाबाट दुआ गर्नुस् । अल्लाह तआला हजुरको सम्पुर्ण दुआ कुबुल गर्नु हुनेछ । इन शा अल्लाह

## इस्लामको ९ औं महिना: रमजान

अर्थ: रमजानको अर्थ “जलाउनु” हो । यो महिनामा मानिसहरुको नेकि र धेरै इबादत गर्नुका कारणले उनिहरुको गुनाहहरु जल्ने (मेटिने) गर्दछ । तसर्थ यस महिनालाई रमजान भनिएको मानिन्छ ।

**मदिना शरिफमा हुदा हिज्रतको दोश्रो बर्ष शाबानको महिनामा रमजानको रोजा फर्ज भयो ।** रमजानको रोजा इस्लामको पाँच आधार स्तम्भ मध्ये एउटा हो र सबैभन्दा धेरै जरुरी र महत्व राखेको आदेश मध्ये एउटा हो । जानी बुझी रमजानको रोजा न राख्ने व्यक्ति सहि अर्थमा मुस्लिम हैन। केवल एउटा रोजा राखेर बिनाकारण तोड्नुको दण्ड (सजाय) जस्लाई कफ्फारा भनिन्छ त्यो यो हो कि एउटा गुलामलाई रिहा गरोस या लगातार साठी (६०) दिन रोजा बसोस् या साठी गरिबहरुलाई दुवै छाकको खाना खुवाओस र तौबा (क्षमायाचना) गरोस। कुरआन करिममा बारम्बार, ठाउँ-ठाउँमा र हदिषे पाकमा हजारौ पल्ट रमजानको रोजा को वर्णन आएको छ। यदि कसैले रमजान को एउटा रोजा जानिबुझी छोडेर बर्षको बाकी ३३५ दिन नै रोजा बसेपनि उस्ले त्यो कुराको बद्ला दिन सक्दैन र जस्को फराइज पुरा हुदैन उस्को नफल पनि कबुल (मान्य) हुदैन ।

**रोजा टुट्ने र नटुट्ने कुराहरु !**

- खानपिन, महिला पुरुष संग सम्भोग गरेमा रोजा टुट्दछ, तर रोजादार रहेको याद थिएन र भुलेर वा धोकामा यो काम भएको हो भने रोजा टुट्दैन।
- बिडि, चुरोट, हुक्का पिउनाले, पान, सुर्ती, गुट्खाको सेवनले पनि रोजा टुट्दछ। पान को पिक थुक्दिए पनि रोजा रहन्न ।
- रोजामा कानमा तेल या औषधि हाल्नाले पनि रोजा टुट्दछ।
- कानमा पानी पुग्यो भने रोजा टुट्दैन।
- लोबान अग्रबत्ती आदिको धुवा नाक या मुखमा गएमा पनि रोजा टुट्दैन।
- महिलालाई छुने या छेड्नाले पनि रोजा टुट्दैन तर इंजाल अर्थात मनि निक्लियो भने चाहिँ रोजा टुट्छ। रोजाको हालतमा सुत्यो र एह्तिलाम (निन्द्राको हालतमा मनि निक्लिने) भयो भने पनि रोजा टुट्दैन । मज्बुरि अनुसार रोजामा हुदा गोस्त (IM) या रगत (IV) मा इन्जेक्सन लगाउन सकिन्छ।

- मज्बुरीको कारणले ग्लुकोज आदिको बोतल पनि चढाउन सकिन्छ तर जहाँ सम्म हुन्छ यो बाट बच्नु नै राम्रो हुन्छ।
- उल्टि (भोमिट) यदि आफै आएको हो भने रोजा टुट्दैन चाहे जति नै होस् तर यदि जानबुझ भोमिट निकालिएको हो भने टुट्छ जब कि मुख भरी होस् ।
- मिस्वास गर्नु, खुश्बु लगाउनु या सुंघ्नु, आँखामा सुर्मा लगाउनु या औषधि लगाउने, टाउको या शरीरमा तेल या बाम मल्नाले पनि रोजा टुट्दैन।
- क्रीम, पाउडर, भेसलिन या मेहंदी लगाउनाले पनि रोजा टुट्दैन।
- दातमा ब्रस या मंजन गर्न बाट पनि बच्न आवश्यक छ यदि ब्रस या मन्जन गरियो र घाँटी या पेटमा केही गएन भने रोजा हुन्छ तर यसरि घाँटीमा मन्जन जान बाट बचाउन गार्हो हुन्छ । राति अर्थात जुन समयमा रोजेदारले खान पिउन जाइज छ त्यो समयमा श्रीमान् श्रीमती बिच संयोग गर्न पनि जाइज छ। अन्य जानकारि को लागि बहारे शरियत या कानुने शरियतलाई हेर्नुहोला ।

## रमजानमा भएका मुख्य घटनाहरु :

१) सयदुना गौषे आजम मुहियुद्दिन अब्दुल कादिर जिलानि रदिअल्लाहु अन्हुको जन्म पहिलो रमजानको दिन ४७१ हिजरीमा भएको थियो ।

२) अल्लाहको नबि हजरत मुहम्मद मुस्तफा सल्लल्लाहु अलैही वसल्लमको पहिलो श्रीमती सैयदा खतिजा रदि अल्लाहु अन्हुको इन्तेकाल ११ रमजानमा भएको थियो ।

३) हजरत मुहम्मद मुस्तफा सल्लल्लाहु अलैही वसल्लमको नाति इमाम हसन रदि अल्लाहु अन्हुको जन्म १५  रमजान इस्लामी ३ हिजरीमा भएको थियो ।

४) इस्लामको पहिलो युद्ध जङ्गे बदर १७ रमजानको दिन हिजरतको दोश्रो बर्ष भएको थियो ।

५) इस्लामी बिजय फत्हे मक्का २० रमजानको दिन इस्लामी ८ हिजरीमा भएको थियो ।

६)  इस्लामी २ हिजरीमा अल्लाहको नबि हजरत मुहम्मद मुस्तफा सल्लल्लाहु अलैही वसल्लमको प्रिय छोरी सैयदा रुकैया रदि अल्लाहु अन्हाको इन्तेकाल १७ रमजानमा भएको थियो ।

७) हजरत मुहम्मद मुस्तफा सल्लल्लाहु अलैही वसल्लम को काका हजरत अब्बासको इन्तेकाल इस्लामी ३२ हिजरीको १२ रमजानको दिन भएको थियो ।

८) शेर ए खुदा, मुश्किल कुशा मौला अलि रदिअल्लाहु अन्हु २१ रमजानको दिन इस्लामी ४० हिजरीमा सहिद हुनु भएको थियो ।

९) इस्लामी ५८ हिजरीको १७ रमजानको दिन हजरत मुहम्मद मुस्तफा सल्लल्लाहु अलैही वसल्लमको श्रीमती हामी सबैको आमा आइशा रदि अल्लाहु अन्हाको इन्तेला भएको थियो ।

१०) २७ रमजानको रात, सांसारिक पहिलो आकाशमा लौहे महफुज बाट कुरआन अवतरण भएको थियो ।

**लैलतुल कद्रको रात:**

यो रात इबादत गर्नेहरुलाई एक हजार महिना भन्दा पनि बढि इबादत गरे बराबरको सवाब प्रदान गरिन्छ । यस रातमा हजरत सय्यिदुना जिब्रील अलैहीस्सलाम तथा अन्य फरिश्ताहरु अवतरण गर्नुका साथै ईबादत गर्नेहरु संग मुसाफहा (हात मिलाउने) गर्छन् । अल्लाह पाकले पवित्र कुरानको अध्याय ३० सुरतुल कद्र् मा यस रातको महत्व बारे ज्ञात गराउन पूरा शुरह कद्र नै अवतरण गर्नुभयो ।

कुरानका व्याख्या गर्ने मुफस्सिरे किरामहरुले यसै सुरह को बारेमा व्याख्या गर्दै लेख्नुभएको छ; "यस रातमा अल्लाह तआलाले कुरआन मजिदलाई लौहे महफुज बाट पहिलो आकाशमा अवतरण गराउनु भयो त्यस पश्चात करिब २३ वर्षको समय लगाएर आफ्ना प्रिय नबि सल्लल्लाहु अलैही वसल्लम माथि लगातार अवतरण गराउनु भयो। "

बुखारी शरीफको हदिसमा बर्णन गरिएको छ: **"जसले यस रातमा ईमान र ईख्लासको साथ रातभरी जागेर उपासना गर्छ, उसको जिवनको पापहरुको क्षमा प्रदान गरिन्छ।"**

हजरते सय्यिदुना उबादा बिन सामित रदि अल्लाहु अन्हुले भन्नुभयो एक पटक अल्लाह तआलाको नबि हजरत मुहम्मद मुस्तफा सल्लल्लाहु अलैही वसल्लम शबे कद्रको बारेमा बताउन बाहिर आउनु भयो तर त्यति बेला दुई मुसलमानहरु आपसमा झगडा गरिरहेको थिए । तब हाम्रा नबि सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो: **"म यस कारण आएको थिए कि तिमिलाई शबे कद्र्को बारेमा बताउ तर यहाँ केहि व्यक्तिहरु आपसमा झगडा गरिरहेका थिए त्यसैले यो रातलाइ गोप्य राखियो। र सम्भव छ कि यसमा**

**तिमिहरुको लागि नै राम्रो रहेको छ । अब यसलाई रमजानको अन्तिम दस दिनको बिजोर (पहिलो, तेस्रो, पाँचौ, सातौं तथा नवौं) रातमा खोज ।**“

धेरै राम्रो र उत्तम त यो हो कि रमजान शरिफको सबै रातमा इबादत गर्नु उत्तम हो तर अन्तिमको २१, २३, २५, २७, २९ औं रातहरु मध्येबाट शबेकदरको रात पर्ने भएकाले यस्को फजिलत प्राप्त गर्न धेरैजसो अवामहरु यी रातहरुमा रातभरी इबादत गर्नुहुन्छ ।

**शबे कदरको नफल नमाजहरु :**

१) इशाको नमाज पछि ७ पल्ट इन्ना अन्जल्नाहु फि लैलतिल कद्र शुरह पढ्ने

फाइदा : हर समस्या बाट छुटकारा पाउनेछ र हजार फरिश्ताहरुले उस्को लागि दुआ ए मग्फिरत गर्नेछ ।

२) २ रकात यो तरिकाले कि हरेक रकअतमा एक पल्ट इन्ना अन्जल्नाहु फि लैलतिल कद्र शुरह र ३ पल्ट कुल हुवल्लाहु अहद शुरह पढ्ने ।

फाइदा : शबे कदर प्राप्त गर्नेछ र जन्नतमा एउटा यस्तो ठूलो महल दिने छ जुन पुर्व देखि पक्षिम सम्म फैलिएको हुनेछ ।

३) २ रकअत यो तरिकाले कि हरेक रकअतमा ७ पल्ट इन्ना अन्जल्नाहु फि लैलतिल कद्र शुरह र ७ पल्ट कुल्हुवल्लाहु अहद शुरह पढ्ने र नमाज पछि इस्तिग्फार र दुरुद पढ्ने ।

फाइदा : अल्लाह तआला यो नमाज पढ्ने व्यक्तिले उस्को आमा बुबाको सबै गुनाह मिटाइदिनु हुनेछ ।

४) ४ रकआत एक सलाम बाट हरेक रकअतमा ३ पल्ट इन्ना अन्जल्नाहु फि लैलतिल कद्र शुरह र ३ पल्ट कुल हुवल्लाहु अहद शुरह पढ्ने ।

फाइदा : मौतको समयमा हुने तक्लिफबाट बच्ने छ ।

५) ४ रकअत एक सलाम बाट हरेक रकअतमा ३ पलट इन्ना अन्जल्नाहु फि लैलतिल कद्र शुरह र ५ पल्ट कुल हुवल्लाहु अहद शुरह पढ्ने र सलाम पछि एक सज्दा मा ४१ पल्ट सुब्हानल्लाह पढ्ने ।

फाइदा : जे दुआ मागे पूरा हुनेछ ।

६) २ रकअत यो तरिकाले कि हर रकअतमा १ पल्ट इन्ना अन्जल्नाहु फि लैलतिल कद्र शुरह र १०० पल्ट कुल हुवल्लाहु अहद शुरह पढ्ने र नमाज पछि ११ पल्ट दुरुद पढ्ने ।

फाइदा : सोच भन्दा नि धैरै सवाब पाइनेछ ।

**एहितकाफ:**

रमजानको अन्तिम दस दिनमा मस्जिदे जमात (अर्थात जुन मस्जिदमा जमातका साथ नमाज पढिन्छ) मा एतिकाफ को नियत बाट बस्नु, सुन्नते मुअक्किदा किफाया हो। यदि मुहल्ला र बस्तीबाट एकजनाले मात्र अदा गर्छन् भने पनि सबैको जिम्मा पूरा हुन्छ र कसैले गरेन भने सबै तारिके सुन्नत अर्थात गुनेहगार हुन्छन्।

**एहितकाफ कसरी गर्ने?:**

बिसौ रोजाको दिन सुर्य डुब्नु भन्दा केही बेर अघि मस्जिदमा पुग्ने र २९ रोजाको दिन चाँद देखे पछि या ३० रोजाको दिन सुर्य डुबेपछि मस्जिद बाट बाहिर निक्लिने। जस्ले एतिफाक गर्छ त्यो ब्यक्ति एतिकाफका दिनहरुमा मस्जिद भित्रै बस्न एकदमै आवश्यक छ। दिशा पिसाब, गुस्ले फर्ज या दोस्रो मस्जिदमा जुमुआ पढ्न को लागि (यदि त्यहा हुँदैन भने) मस्जिद भन्दा बाहिर जान सक्छन् । यो बाहेक अरु कामको लागि बाहिर निक्लेमा एतिकाफ टुट्दछ ।

**केही सुन्नत र नफलहरु :**

**तहयतुल वजु:**

मुस्लिम शरिफमा छ कि नबिए करिम सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो कि जस्ले वजु गर्छ र राम्ररि गर्छ र भित्री र बाहिरी रुप ले एकिकृत भएर दुई रकअत (नमाज तहयतुल वजु ) पढ्छ उस्को लागि जन्नत वाजिब हुन्छ।

**इशराक को नमाज:**

तिर्मिजी शरिफमा छ कि नबि ए करिम सल्लल्लाहु अलैही वसल्लम ले भन्नुभयो-"जस्ले फजर को नमाज जमाअत को साथ पढेर अल्लाह को जिक्र गरिरहन्छ यति सम्म कि घाम उदाइ सक्छ र फेरि दुई रकअत नमाज इश्राक को पढ्छ, उस्लाई पुरा हज र उमराको सवाब मिल्दछ।

**चाशत को नमाज:**

चाश्त को नमाज मुस्तहब हो। थोरैमा दुई (२) र धैरैमा बारह (१२) रकअत हुन्छ। तिर्मिजी र इब्ने माजा मा छ कि हुजुर सैयेदे आलम सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो-"जस्ले चास्त को दुई रकअतलाई बचाउन सक्यो उस्को गुनाह बख्शिन्छ यति सम्म कि समुद्रको झाक बराबर नै किन न होस्।"

**तहज्जुद को नमाज:**

तहज्जुद को नमाज को समय इशाको नमाज पढेर सुतेर उठेपछि बिहान सुब्ह सादिक सम्म रहन्छ। तहज्जुद को नमाज थोरैमा दुई रकअत (२) र हुजुर सल्लल्लाहु अलैही वसल्लम बाट आठ (८) रकअत सम्म साबित छ । हदिश शरिफमा यस नमाजको निकै फाइदा बर्णन गरिएको छ। निसाइ र इब्ने माजामा छ कि नबिए करिम सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो-" जुन व्यक्ति राति उठेर आफ्नो श्रीमतीलाइ उठाएर दुई दुई रकअत नमाज पढ्छन उनिहरुको नाम निकै स्मरण गर्ने व्यक्तिहरुमा लेखिन्छ ।

**सअलातुत्तस्बिह:**

यस नमाजमा निकै फाइदा र सवाब छ। र यसमा माफीको उम्मिद छ । यो चार रकअत नफल हो । जुन समयमा नफल पढ्न मनाही गरिएको छ त्यो बाहेक जुन बेला पनि पढ्न सकिन्छ। राम्रो यो होकि जुहर को

नमाज भन्दा अगाडि पढ्ने र अफ्जल दिन जुमुआको हो । सकिन्छ भने दिनमा एक पल्ट नत्र हप्तामा एकपल्ट नभए बर्षमा एकपल्ट यदि यो पनि सकिदैन भने जीवनमा एकपल्ट पढ्ने। यसमा निकै फाइदा छन्।

**सलातुत्तस्बिह कसरी पढ्ने? :**

अल्लाहु अक्बर भनेर नियत बाध्ने, अनि सना पढेर पन्ध्र (१५) पल्ट यो तस्बिह पढ्ने

**सुब्हानल्लाहि वल्हम्दु लिल्लाही व ला इ लाह इल्लल्लाहु वल्लाहु अक्बर**

अब अवुजुबिल्लाह र बिस्मिल्लाह पढेर सुरह फातिहा र कुनै दोस्रो शुरह मिलाएर पढ्ने । यो पछि तस्बीह दस (१०) पल्ट पढ्ने अनि रुकुअ गर्ने र सुब्हान रब्बियल अजिम पढेर दस (१०) पल्ट तस्बिह पढ्ने । अब टाउको उठाएर यानि सिधा उभिएर दस (१०) पल्ट पढ्ने। अनि सज्दामा जाने र सुब्हान रब्बियल आला पढेर दस (१०) पल्ट तस्बिह पढ्ने अनि टाउको उठाएर जब बसिन्छ दस (१०) पल्ट पढ्ने अब दोश्रो सज्दा गर्ने र सुब्हान रब्बियल आला पढेर दस (१०) पल्ट तस्बिह पढ्ने । यसरी एक रकअत मा पचहत्तर (७५) तस्बिह हुन्छ। यसपछि हरेक रकअत यसरी नै पढ्ने, हरेक रकअत को शुरुवातमा किरअत भन्दा अगाडि पन्ध्र (१५) पल्ट र बाकि ठाऊमा १०-१० पल्ट पढ्ने।

## इस्लामी दसौ महिना : सव्वाल

अर्थ : टुट्नु वा टुक्रा हुनु । इस्लाम आउनु अघि अरबका बासिन्दाहरुले यस महिनामा गरिएको निकाहलाई सफल मान्दैन थिए । तसर्थ यो नाम त्यही टुक्रा हुने भ्रम र अन्धविश्वासको कारणले राखिएको मानिन्छ जुन पछि इस्लामको दियो बल्ना साथ गलत साबित हुन्छ ।

सव्वालको पहिलो दिन: इस्लामी महिना रमजानको अन्त्य संगै सव्वाल महिनाको पहिलो दिन इद उल फित्रको रुपमा मनाइन्छ जस्मा सम्पुर्ण मुस्लिमहरु अल्लाहको बारगाहमा शुक्र अदा गर्ने गर्छन् ।

**इदको दिन के गर्ने :**

इदको दिन मिस्वाक गर्नु, गुसल गर्नु, खुश्बु लगाउनु, इदगाह को लागि एउटा बाटो बाट जानु र अर्को बाट फर्किनु सुन्नत हो र इदगाह जादा जिक्र गर्दै जाने र फर्कदा यहि पढ्दै आउने :

**अल्लाहु अक्बर अल्लाहु अक्बर लाईलाह इल्लल्लाह वल्लाहु अक्बर अल्लाहु अक्बर व लिल्लाहिल हम्द**

**नमाज ए इदको तरिका:**

पहिला नियत गर्ने (नियत गरे मैले दुइ रकअत नमाज वाजिब इदुल फित्र को जायद छ (६) तक्बिर का साथ अल्लाह तआला को लागि, मुक्तदी यो पनि थप्ने (पछाडि यस इमाम को) अनुहार मेरो कआबा शरिफ तर्फ अब दुवै हात उठाएर कान सम्म लग्ने र अल्लाहु अक्बर भन्दै हात तरिका अनुसार नाइटो मुनि बाध्ने अब सना पढ्ने अनि कान सम्म हात लगेर अल्लाहु अक्बर भन्दै हात छोड्ने, फेरि हात उठाएर अल्लाहु अक्बर भन्दै हात छोड्ने र तेस्रो पटक अल्लाहु अक्बर भन्दै हात बाध्ने। यस पछि इमाम ले बिस्तारै अउजुबिल्लाह र बिस्मिल्लाह पढेर ठूलो स्वरमा अल्हम्दु (शुरह फातिया) र यो सङ्गै कुनै शुरह लगाउछन अनि रुकुअ र सज्दाह गर्छन र त्यो बाट फारिग भए पछि दोस्रो रकअतमा अल्हम्दु का साथ कुनै शुरह पढ्ने । अब फेरि तीन पल्ट अल्लाहु अक्बर भन्दै हात कान सम्म लिएर जाने र हरेक पल्ट अल्लाहु अक्बर भन्ने र कुनै पल्ट पनि हात न बाध्ने र चौथो पल्ट हात नउठाइ अल्लाहु अक्बर भन्दै रुकुअमा जाने र बाकी नमाज जसरी नै पुरा गर्ने । सलाम फेरे पछि इमाम उठेर खुत्बा पढ्छन् अनि दुआ गर्छन् ।

इदको दिन सबै संग खुशीका साथ भेट्नु पर्छ र कुनै पीडा नै छ भने पनि त्यसलाई अनुहारमा नदेखाउने।

इदुल फित्र को नमाज को लागि निक्लिनु भन्दा अगाडि केही खाने र पिउने खास गरि केही मीठो कुरा र केही छुहारा र खजुर छन् भने खाएको राम्रो हुन्छ र यो सुन्नत पनि हो ।

इदुल फित्रको नमाज भन्दा अघि आफु र आफ्नो सबैपरिवारको सद्का ए फित्र निकाल्नु वाजिब छ। जस्को सहि मिकदार सहि तहकीक अनुसार दुई किलो पैतालिस ग्राम (२.०४५ के.जि.) गहुँ या त्यस्को रकमको पैसा या अरु केही कुरा। मस्जिद र इदगाहमा भिख माग्नेहरु आफ्नो लागि माग्दछ त्यसैले तिनिहरुलाई त्यहा आउन, सफमा घुस्न र भिकको लागि एलान गर्न दिनुहुदैन। दिनी तहरिक र त्यस्को चन्दा र तकरिरको पनि त्यहा एक हद राख्दिनु पर्दछ किन कि त्यस्को ज्यादती पनि त्यहा उचित हुदैन। कहि यस्तो न होस कि इदको नमाज कम र त्यहि कुरा धैरै जरुरी मान्न थालियोस्। इदको नमाज पछि मुस्लिमहरु एकआपसमा आफ्नो दाजु भाइसंग मुसाफा र अन्कमाल गर्नु जाइज छ ।

**सव्वालको छ (६) रोजा :**

सव्वालको महिनामा छ दिन रोजा राख्नु सुन्नत हो । हजरत अबु अय्युब अन्सारी रदि अल्लाहु अन्हुले वर्णन गर्नु हुन्छ कि अल्लाहको नबि हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लम ले भन्नुभयो ;" **जुन व्यक्तिले रमजानको रोजा राखेर सव्वालको पनि छ (६) दिन रोजा राख्नेछ उस्ले जीवन भरी रोजा राखेको सवाब पाउनेछ"(मुस्लिम)**

नोट : रोजा २,३,४ गरेर राखे पनि हुन्छ या २,८,११,१३ गरेर राखेनी हुन्छ ।

**सव्वालमा भएका मुख्य घटनाहरु:**

•१ सव्वाल: इदुल फित्रको दिन।

•४ सव्वाल:  हजरत आइशा सिद्दिका र नबि ए करिम सल्लल्लाहु अलैही वसल्लमको निकाह भएको दिन।

•३ सव्वाल:  इस्लामी ३ हिजरीमा उहुदको युद्ध भएको दिन।

•७सव्वाल:  इस्लामी ८ हिजरीमा हुनैनको युद्द भएको दिन।

•७सव्वाल:  सैयदुश शुहदा अमिर हम्जा रदि अल्लाहु अन्हुको शहादतको दिन।

•१५सव्वाल: इस्लामी ५ हिजरीमा खन्दकको युद्ध भएको दिन।

## इस्लामी ११औं महिना : जुल काअदा

अर्थ : जुल कअदा इस्लामको एघारौ महिना हो । यो महिना इस्लाम अघि पनि निकै पवित्र मानिन्थ्यो ।कअदाको अर्थ "आराम" हुन्छ । इस्लाम अघि अरबका बसिन्दाहरु युद्ध रोकेर आफ्नो घरमा बसेर आराम गर्दथे ।

## इस्लामी अन्तिम महिना : जुल हिज्जह

अर्थ : जुल हिज्जहको अर्थ "हजको महिना" हो । इस्लामि पात्रो (हिज्री संवत) अनुसार वर्षको पहिलो महिनालाई ‘मुहर्रम’ र अन्तिम महिनालाई ‘जुल्हिज्जा’ भनिन्छ ।  इस्लामको पाचौं स्तम्भ "हज" यहि

पवित्र महिनामा गरिन्छ । पुरा महिना मध्ये पहिलो दस दिन निकै बरकतवाला रहेको छ किनकी हज यहि १० दिनमा हुने गर्दछ । हुन त यो पुरा महिना हजारौं रहमत र बरकतले भरिपूर्ण  छ तर इस्लामी तारिख अनुसार यहि दस दिन धेरै महत्वपुर्ण रहेको कुरा हामीले थाहा पाउने गर्दछौ ।

हजरत अब्दुल्लाह बिन अब्बास रदिअल्लाहु अन्हुले भन्नुभएको छ, नबी सल्लल्लाहु अलैही-व सल्लामले भन्नुभयो: **“यी दश दिनहरूको सत्कर्म (नेक कार्य) भन्दा अन्य दिनहरूमा गरिने अरु कुनै सत्कर्म अल्लाहलाई बढि प्रिय छैन ।“** साहाबाले सोधे, के अल्लाहको मार्गमा युद्ध (जेहाद) गर्नु पनि यति महत्त्वपूर्ण छैन ? उहाँ सल्लल्लाहु अलैही वसल्लमले उत्तर दिनुभयो, त्यो पनि छैन, मात्र यस्तो ब्यक्ति बाहेक जो अल्लाहको मार्गमा आफ्नो शरीर र सम्पत्ती सहित निस्कियो अनि फेरि केही लिएर फिर्ता भएन **”(अर्थात आफ्नो शरिर र सम्पत्तीका साथ जिहाद गर्दा-गर्दै शहिद भयो ।”)** (सही बुखारी, किताबुल इदैन)

**अरफातको दिन रोजा :**

हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लमले भन्नुभएको छ- "**अरफातको दिनको रोजा राख किनकि यस्ले तिम्रो अघिल्लो एक बर्ष र पछिल्लो एक बर्ष गरि दुई बर्षको गुनाह मिटाइदिने गर्दछ"।(मुस्लिम शरिफ : ११६२)**

हजरत जाबिर रदिअल्लाहु अन्हु द्वारा बर्णन गरिएको छ कि अल्लाहका रसूल सल्लल्लाहु अलैही वसल्लामले भन्नुभयो **:“अर्फाको दिन अन्य दिनहरू-भन्दा उत्तम दिन हो ।” (सही इब्ने हिब्बान)**

**इद उल अज्हाको दिन गरिने कार्यहरु :**

दस जुल हिज्जालाई इद उल अजहा भनेर भनिन्छ । यो इस्लामको दोस्रो महत्वपूर्ण इद हो । यो दिन मिस्वाक गर्नु, गुसल गर्नु, खुश्बु लगाउनु, इदगाह को लागि एक बाटो बाट जानु र अर्को बाट फर्किनु सुन्नत हो र इदगाह जादा जिक्र गर्दै जाने र फर्कदा यो तस्बिह पढ्दै आउने :

**अल्लाहु अक्बर अल्लाहु अक्बर लाईलाह इल्लल्लाह वल्लाहु अक्बर अल्लाहु अक्बर व लिल्लाहिल हम्द।**

**नमाज ए इदको तरिका:**

पहिला नियत गर्ने (नियत गरे मैले दुइ रकअत नमाज वाजिब इदुल अजहा को जायद छ (६) तक्बिर का साथ अल्लाह तआला को लागि, मुक्तदी यो पनि थप्ने (पछाडि यस इमाम को) अनुहार मेरो कआबा शरिफ तर्फ, अब दुवै हात उठाएर कान सम्म लग्ने र अल्लाहु अक्बर भन्दै हात सधै झै तरिका अनुसार नाइटो मुनि बाध्ने अब सना पढ्ने अनि कान सम्म हात लगेर अल्लाहु अक्बर भन्दै हात छोड्ने, फेरि हात उठाएर अल्लाहु अक्बर भन्दै हात छोड्ने र तेस्रो पटक अल्लाहु अक्बर भन्दै हात बाध्ने। यस पछि इमाम ले बिस्तारै अउजुबिल्लाह र बिस्मिल्लाह पढेर ठूलो स्वरमा अल्हम्दु र यो सङगै कुनै सुरह लगाउछन अनि रुकुअ र सज्दाह गर्छन र त्यो बाट फारिग भए पछि दोस्रो रकअतमा अल्हम्दु का साथ कुनै शुरह पढ्ने । अब फेरि तीन पल्ट अल्लाहु अक्बर भन्दै हात कान सम्म लिएर जाने र हरेक पल्ट अल्लाहु अक्बर भन्ने र कुनै पल्ट पनि हात न बाध्ने र चौथो पल्ट हात नउठाइ अल्लाहु अक्बर भन्दै रुकुअमा जाने र बाकी नमाज अरु जसरी नै पुरा गर्ने । सलाम फेरे पछि इमाम उठेर खुत्बा पढ्छन् अनि दुआ गर्छन् ।

**कुरबानी गर्नु :**

हजरत जैद ईब्न अकरम रदि अल्लाहु अहनु को भनाई अनुसार एक पटक सहाबाहरुले अल्लाह को नबी हजरत मुहम्मद मुस्तफा सल्लल्लाहु अलैही वसल्लम सँग सोधे, हे नबी ! सल्लल्लाहु अलैही वसल्लम यो कुर्बानी के हो? नबी सल्लल्लाहु अलैही वसल्लम ले भन्नुभयो **"यो कुर्बानी तिम्रा बुवा ईब्राहिम अलैहिस सलाम को सुन्नत हो ।"** फेरि सहाबाले प्रश्न गरे कुर्बानीको बदलामा हामीले के पाउनेछौँ? हजुर नबि सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो कुर्बानीको जनावर को प्रतेक रौँ को बदलामा एक नेकी (पुण्य) पाउनेछ । (ईब्न माजा, तिर्मिजी)

**जुल हिज्जामा भएका मुख्य घटनाहरु :**

१) १० हिजरिमा हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लमले यसै महिना एतिहासिक हज गर्नु भयो र यसैमा आफ्नो खुत्बा बयान गर्नु भयो । यो हज "हज्जतुल वदा" को नाममा प्रख्यात छ ।

२) यहि महिनामा हजरत उस्मान रदि अल्लाहु अन्हु तेस्रो खलिफा चुनिनु भएको थियो र यहि महिनाको १५ तारिखमा वहाँ सहिद हुनु भयो ।

३) हजरत उमर ए फारुक यहि महिनाको २८ तारिख इस्लामी २६ हिजरीमा सहिद हुनु भएको थियो ।

४) यसै महिनाको ९ तारिखमा अरफातको दिन छ ।

५) यसै महिनाको १० तारिखमा यौमे कुरबानी रहेको छ ।

*************************************************************************

## संकलकका केही अन्य पुस्तकहरु:

**रमजानको उपहार**

यो उर्दु किताब "रमजानको तोहफा" को नेपाली अनुवाद हो । इस्लामी महत्वपूर्ण महिना रमजानमा बसिने रोजा सम्बन्धि हरेक बिषयबस्तुलाई नेपाली पाठकहरु को निम्ति सरल तरिकाले उल्लेख गरिएको किताब जस्को नेपालि नाम **"रमजानको उपहार"** राखिएको छ । किताबको Pdf प्राप्त गर्न +9779821233155 Whatsapp
वा somepeople.sk@gmail.com मा सम्पर्क राख्नुहोला ।

**हजरत शेर ए नेपाल को जिवनी र योगदान**

नेपाली इतिहासको सबै भन्दा ठुला आलिम मुफ्ती जैश मुहम्मद सिद्दिकी रहमतुल्लाह अलैह को जिवनि र वहाँको योगदान बारे बिस्तृत रुपमा उल्लेख गरिएको किताब जस्को संकलक साजिद अहमद हुन् । किताबको PDF प्राप्त गर्न +9779821233155 Whatsapp वा
Email: somepeople.sk@gmail.com मा सम्पर्क राख्नु होला ।

नोट : इस्लामको तालिम सिक्नु र सिकाउनु सबैभन्दा उत्तम इबादतहरु मध्ये एक हो । यस्को सवाबको कुनै सिमा नै हुदैन । उल्लेखित किताब सवाब वा इसाले सवाबको निम्ति Publish गर्ने इच्छा भएमा उल्लेखित नंमाहरुमा सम्पर्क राख्न सकिन्छ
+977980-7156507 | +9779821233155

*-------------समाप्त------------*